





# यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता): आधारभूत अवधारणा

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

# यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा

लेखक तथा प्रकाशक :

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा

**लेखक तथा प्रकाशक :** क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

**सम्पादक :** रुक्शना कपाली (कानुनको विद्यार्थी र भाषाविज्ञान अध्ययनकर्ता), इशान रेग्मी (नेपाली भाषा र साहित्यमा स्नातक)

**टिप्पणीकर्ताहरू :** दिपेश खनाल (समाज सेवामा स्नातक अध्ययनरत), डा. कुमुद राना (लैङ्गिकता र यौनिकता अभियानका क्षेत्रमा प्राज्ञिक अध्ययनकर्ता), बिपिन कडायत (अन्तरलिंगी अधिकारकर्मी), सङ्गीता थेबे लिम्बू (लैङ्गिकता र प्रकोप सम्बन्धी विद्यावारीधि अध्ययनरत), मोनिका निरौला (अन्तर्राष्ट्रिय विकासमा लैङ्गिक विश्लेषणमा स्नातकोत्तर), काशिराम ढुंगाना (मानव अधिकार अधिवक्ता), डा. श्वेता बानियाँ (सहायक प्राध्यापक, भर्जीनिया टेक युनिभर्सिटी), सगुन थापा (व्यवसाय अध्ययनमा स्नातक), आरोन थापा (व्यवसाय प्रशासनमा स्नातक), नूर केसी (अभियानता), आयान थपलिया (प्राथमिक तहमा अङ्ग्रेजी तथा विज्ञान शिक्षक, मानविकी संकायमा स्नातक), सुरक्षा जोशी (मनोविज्ञानमा स्नातक अध्ययनरत), राजी मन्जरी पोखरेल (मानसिक स्वास्थ्यकर्मी) ।

**आर्थिक सहयोग :** छपाईका लागि - इन्टरसेक्स एसिया (Intersex Asia)

Paperback

**ISBN: 978-9937-0-8469-7**

ने.सं. : ११४१ सिल्ला १७  वि.सं. : २०७७ माघ २१  ई.सं. : ३ फेब्रुअरी २०२१

**संस्करण :** प्रथम



**सम्पर्क :** queeryouthgroup.nepal@gmail.com, campaignforchange17@gmail.com

# भूमिका

नेपालका समाजहरूमा लैङ्गिकता एवं यौनिकतालाई संकुचित रूपमा हेरिन्छ । कुनै शिशु जन्मने बित्तिकै उसको यौनाङ्गको आधारमा उसको लैङ्गिकताको निर्धारण गरिन्छ भने उसले कस्तो लैङ्गिकताको अर्को व्यक्तिसँग सम्बन्ध राख्छ भन्ने कुरामा समेत अड्कल गरिन्छ । कुनै शिशु जन्मँदा यौनाङ्ग शिश्न भएमा ऊ पुरुष र उसले महिला मनपराउँछ अनि यौनाङ्ग योनी भएमा ऊ महिला र उसले पुरुष मनपराउँछ भन्ने धारणामा मात्र लैङ्गिकता र यौनिकताको बुझाई सीमित छ । समाजको यस धारणाले समेट्न नसकेका लैङ्गिक एवं यौनिक विविधता अन्तर्गतका व्यक्तिहरू विभिन्न किसिमका दमन, उत्पीडन, विभेद तथा लाञ्छना भोग्न बाध्य छन् ।

नेपालमा लैङ्गिकता र यौनिकता प्रतिको सामाजिक भाष्य कुण्ठापूर्ण र सीमित छ । यस समाजले लैङ्गिकता र यौनिकताको अर्थ एकै हो भनी बुझ्नु अनौठो पनि होइन । नेपाली भाषाको परम्परागत चलनचल्तीमा 'लिङ्ग' भन्ने शब्दले नै सेक्स र जेण्डर दुबैलाई जनाउने गरेको भएर भाषिक अन्योलता पनि रहेको देखिन्छ ।

यद्यपि विगत केही दशक देखिको आन्दोलन र यस सन्दर्भमा भएका विचार विमर्शहरूको परिणामस्वरूप हामीलाई पनि समावेश हुने, विभेदित नतुल्याउने, लाञ्छित एवं अन्यकरण नगर्ने प्रकारको अवधारणा, परिभाषा एवं भाषाको क्रमश: विकास हुँदै आएको पाईन्छ । यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता)को अवधारणाले लैङ्गिकता एवं यौनिकतालाई थप समावेशी बनाउने र उदार ढङ्गले परिभाषित गर्ने काम गरेको छ ।

अन्तर्राष्ट्रिय कानून तथा अभ्यासहरू समेतका आधारमा विगत धेरै वर्ष देखि हामीले नेपाली भाषामा समेत यस अवधारणाको बारेमा छलफल, विचार विमर्श र बहस गर्दै आएका छौं । हामीले विभिन्न माध्यमहरूबाट यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता

(यौभिकयौता) सम्बन्धी जनचेतना जगाउने प्रयासहरू समेत गरेका छौँ । यस सन्दर्भमा  यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता)का बारे आधारभूत जानकारी दिने यो पुस्तक हाम्रो पहिलो खुड्किलो हो । यस पुस्तक मार्फत् हामीले यौभिकयौता बारेको आधारभूत अवधारणाहरूलाई अक्षरिकरण गर्ने प्रयास गरेका छौँ ।

लिङ्ग, लैङ्गिकता र यौनिकतालाई संकीर्ण ढङ्गले हेर्ने समाजबाट खुला र उदार रूपमा हेर्ने समाज तर्फ रूपान्तरण हुँदा चलनचल्ती र परम्परागत धारणाहरू प्रतिस्थापन हुँदै सोही ढङ्गले अझै उदार मूल्य मान्यताहरू स्थापित हुँदै जानु स्वभाविक हो । कुनै विषयवस्तुमा कुरै गर्न नपाउने अवस्था वा कुरा गरेपनि संकुचित ढङ्गले मात्र कुरा हुने अवस्थामा र क्रमशः खुला ढङ्गले कुराकानीहरू बढ्दै जाँदा उक्त विषयमा अवधारणागत विकास सँगै भाषिक विकास हुनु पनि स्वभाविक नै रह्यो । यही विचार विमर्शको दायरा बढ्दै जाँदा यस सम्बन्धीका अवधारणा एवं विमर्श पनि सोही ढङ्गले गतिशील रहन्छ । यस पुस्तकमा उल्लेखित शब्दहरू यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) सम्बन्धी प्रायः प्रयोगमा आउने शब्दहरू भए तापनि यतिमा मात्र सीमित छैनन्, र यी शब्द एवं पहिचानहरू विकासोन्मुख र गतिशील (evolving and dynamic) छन् ।

यो पुस्तक यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) बारे आधारभूत अवधारणा बुझ्न सकून् भन्ने हेतुले प्रकाशन गरिएको हो । अत:  यस विषय सम्बन्धी अध्ययनका लागि यो पुस्तक प्रारम्भिक बुझाई स्थापनार्थः उपगोगी हुनेछ । यस बारे अझै विस्तृत र व्यापक ढङ्गले बुझ्न थप स्रोत सामाग्रीहरू  अध्ययन गर्न आवश्यक हुन्छ । यस सम्बन्धी हामी आगामी दिनहरूमा अवश्य नै क्रियाशील हुनेछौँ ।

आशा छ पुस्तकले यौभिकयौता र यस सम्बन्धमा सबैको बुझाईमा थप प्रष्टता ल्याउन मद्दत गर्नेछ ।

# धन्यवाद ज्ञापन

सर्वप्रथम यस पुस्तकलाई सम्भव बनाउन महत्वपूर्ण योगदान पुऱ्याएकोमा यस क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्जका सदस्यहरू, यस पुस्तकका सम्पादक लगायत यस पुस्तकलाई अन्तिम स्वरूप प्रदान गर्न यसका सामाग्री, भाषा एवं शब्दशब्दमा टिकाटिप्पणी गरेका एवं सल्लाह सुझाव दिएका सम्पूर्णमा धन्यवाद दिन चाहन्छौँ ।

यस पुस्तकको आइएसबिएन (ISBN) नम्बर लिनका निम्ति नमिता कँडेलज्यूले आर्थिक सहयोग गरेका हुन् भने पुस्तकको छपाईका लागि इन्टरसेक्स एसिया (Intersex Asia) ले आर्थिक सहयोग गरेका हुन् । यस पुस्तकको लेखन कार्य, सम्पादन कार्य, टिकाटिप्पणी दिने कार्यमा संलग्न सबै व्यक्तिहरूले श्रमदान गरेका हुन् ।

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज संस्थाहरू लगायत अरु अनौपचारिक समूह वा लूज-नेटवर्कका रूपमा रहेका क्वयेर राइट्स् कलेक्टिभ (Queer Rights Collective), ट्रान्स राइट्स् कलेक्टिभ (Trans Rights Collective) र नन्-बाइनेरी कलेक्टिभ (Non-Binary Collective) ले विगतमा यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) सम्बन्धी स-साना पिडिएफ दस्तावेजहरू तयार गरि प्रकाशन गरेका थिए । त्यही छरिएर रहेका पिडिएफ दस्तावेजहरूले लिपिवद्ध गरेका कुराहरूलाई नै सम्पादन गरि यो पुस्तक तयार गर्ने निर्णय गरिएको हो । छरिएर रहेका उक्त दस्तावेजहरूलाई क्वयेर युथ ग्रुपका अध्यक्ष र समाज सेवामा स्नातक अध्ययनरत विद्यार्थी दिपेश खनालज्यूले यसको समीक्षा गरेका हुन्।

त्यसैगरि यस पुस्तकको अवधारणा सहित खाका तयार पार्ने काम पुस्तकको सम्पादक रुक्शना कपालीज्यूले गरेका हुन् । यो पुस्तकले समेट्नु पर्ने विषय लगायतका यसको तयारीको लागि आवश्यक सन्दर्भ सामाग्रीको सङ्कलन तथा अध्ययन विधिका सम्बन्धमा विभिन्न चरणमा

छलफल गरिएको थियो । जसमा लेखक तथा प्रकाशक संस्था क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्जका साथै हाम्रा दौंतरी समूह क्वयेर राइट्स् कलेक्टिभ र ट्रान्स राइट्स् कलेक्टिभ (पारलैङ्गिक अधिकार समूह)का सम्पूर्णले आफ्नो सुझाव सल्लाह दिएका थिए । पुस्तकको प्रथम मस्यौदा रुक्शना कपालीज्यूले तयार गरेका थिए । उक्त मस्यौदामा चरणबद्ध रूपमा छलफलहरू गरिएका थिए ।

पहिलो चरणको छलफलमा BALLB कानुनका विद्यार्थी एवं भाषाविज्ञान अध्ययनकर्ता रुक्शना कपाली, नेपाली भाषा र साहित्यमा स्नातक इशान रेग्मी, अन्तरलिङ्गी अधिकारकर्मी बिपिन कडायत र लैङ्गिकता तथा यौनिकता अभियानका क्षेत्रमा प्रज्ञिक अध्ययनकर्ता डा. कुमुद राना सहभागी भएका थिए । त्यसै गरि दोस्रो चरणको छलफलमा क्वयेर राइट्स् कलेक्टिभका सदस्यहरू सहभागी थिए । तेस्रो चरणको छलफल ट्रान्स राइट्स् कलेक्टिभ (पारलैङ्गिक अधिकार समूह) का सदस्यहरू व्यवसाय अध्ययनमा स्नातक सगुन थापा, व्यवसाय प्रशासनमा स्नातक आरोन थापा, प्राथमिक तहमा अङ्ग्रेजी तथा विज्ञान शिक्षक र मानविकी संकायमा स्नातक आयान थपलिया र अभियानता नूर केसी सँग गरिएको थियो ।

त्यसै गरि यस पुस्तकको मस्यौदा अध्ययन गर्न र त्यसमा टिकाटिप्पणी एवं सल्लाह सुझाव दिन इच्छुकहरूलाई सम्पर्क गर्न अनुरोध गर्दै सामाजिक संजाल लगायत ईमेल समूहहरू मार्फत् आवहान गरिएको थियो । यसबाट विभिन्न व्यक्ति र संस्थाहरू यस पुस्तक निर्माण अभियानमा जोडिन पुगे । यसरी जोडिनेमा लैङ्गिकता र प्रकोप सम्बन्धी विद्यावारीधि (PhD in Gender and Disaster) गरिरहेका अनुसन्धानकर्ता सङ्गीता थेबे लिम्बू, अन्तर्राष्ट्रिय विकासमा लैङ्गिक विश्लेषणमा स्नातकोत्तर (Masters in Gender analysis in International Development) मोनिका निरौला, भर्जिनिया पोलिटेक्निक इन्स्चित्युट एण्ड स्टेट युनिभर्सिटी (Virginia Polytechnic Institute and State University) मा सहायक प्राध्यापकका रूपमा कार्यरत डा. श्वेता बानियाँ, मानसिक स्वास्थ्यकर्मी राजी मन्जरी पोखरेल र मनोविज्ञानमा

स्नातक अध्ययनरत सुरक्षा जोशी थिए । मानव अधिकार अधिवक्ता काशिराम ढुंगानाज्यूले यसको वाक्य-वाक्य केलाएर सम्पादन सुझाव दिएका थिए । उनीहरूले यस पुस्तकको मस्यौदामा गुगल डक मार्फत् प्रदान गरेका महत्वपूर्ण टिप्पणी एवं सल्लाह सुझावका लागि हामी आभारी छौँ ।

अन्ततः यस पुस्तकका लेखक तथा प्रकाशक संस्थाका सदस्यहरू भेला भई यस पुस्तकमा अन्तिम चरणको छलफल गरि यस पुस्तकलाई तयार पारेका छौँ । तत्पश्चात् यस पुस्तकको आन्तरिक डिजाइन मिलाउने कार्य रुक्शना कपालीज्यूले गरे भने यल (पाटन) नःबही स्थित सुभाष प्रिन्टिङ प्रेसमा कभर पेज डिजाइन गर्ने, यस पुस्तकको ई-कपी बनाउने र छपाई कार्य भयो ।

# विषय सूची

# प्रारम्भिक बुझाई




**तस्वीर : मनू मरि चित्र**
**तस्वीर बनाउने व्यक्ति : सुकी मानन्धर**

माथिको यो चित्रमा देखाइएको मानव आकृतिलाई हेरौँ । यस चित्रलाई हामी '**मनू मरि चित्र**' भन्छौँ । नेवाः समुदायले मनाउने स्वन्ति नखः (तिहार) र विशेष गरि किजा पुजा (भाइ टिका) का दिन पिठोबाट यमराज, गणेश लगायत विभिन्न देवीदेवताहरू बनाइन्छ । त्यसलाई 'द्यःमरि' भनेर भनिन्छ । 'द्यःमरि'को शाब्दिक अर्थ 'देवता रोटी' हो । त्यही 'द्यःमरि'को आधार लिएर हामीले यो मानवाकृतिको 'मनू मरि' बनाएका हौँ । 'मनू मरि'को शाब्दिक अर्थ 'मानव रोटी' हो । यस मनू मरि चित्र मार्फत् हामीले यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषतालाई खण्डगत रूपमा बुझाउने प्रयास गरेका छौँ ।

यो चित्रमा यौन विशेषता भनेर मान्छेको दुई खुट्टा बिचको भागलाई देखाइएको छ । यसले यौनाङ्ग वा बाह्य प्रजनन अङ्ग लाई जनाउन खोजेको हो । हरेक व्यक्तिको यौनाङ्ग प्रजनन

प्रणालीका अङ्गहरू तथा गुणसुत्रका ढाँचाबाट छुट्टिने भिन्नताहरूलाई **यौन विशेषता** (अङ्ग्रेजीमा : **Sex Characteristics**) भनिन्छ ।

त्यसैगरि पहिचान भनेर व्यक्तिको मस्तिष्कमा देखाइएको छ । यसले लैङ्गिक पहिचानलाई जनाउँछ । प्रत्येक व्यक्तिको लैङ्गिकता सम्बन्धी स्वःअनुभूती निजको **लैङ्गिक पहिचान** (अङ्ग्रेजीमा : **Gender Identity**) हो । कुनै व्यक्ति पुरुष, महिला वा त्यस बाहेक अरु केही रहेको कुरा निज व्यक्तिको अन्तरमनको बोध (internal sense) लाई नै लैङ्गिक पहिचान भनिन्छ ।

आकर्षण भनेर व्यक्तिको मुटुमा देखाइएको छ । खासमा मुटुको काम त रगत संचालन सम्बन्धी हो तर यस चित्रमा मनलाई इङ्गित गरि मनपराउनुको भाव भन्न खोजिएको हो । व्यक्तिले मनपराउनुको भाव अर्थात् यौनिक (sexual) र प्रणयात्मक (romantic) आकर्षणको महसुस गर्नु हो । यस्तो आकर्षणलाई **यौन अभिमुखिकरण** वा **यौन झुकाव** (अङ्ग्रेजीमा : **Sexual Orientation**) भनिन्छ । कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन आकर्षण महसुस गरिन्छ भन्ने विषय निजको यौन अभिमुखिकरण वा यौन झुकाव हो । कतिपयले यसलाई यौनिक पहिचान (अङ्ग्रेजीमा : Sexual Identity) पनि भन्ने गरिन्छ ।

# यौन विशेषता

हरेक व्यक्तिको यौनाङ्ग प्रजनन प्रणालीका अङ्गहरू तथा गुणसुत्रका ढाँचाबाट छुट्टिने भिन्नताहरूलाई **यौन विशेषता** (अङ्ग्रेजीमा : **Sex Characteristics**) भनिन्छ ।[1,2]

- पुलिङ्गी (अङ्ग्रेजीमा : Male sex) भन्नाले शिश्न (Penis), अण्डकोष लगायत यौनाङ्ग र मुख्यतः XY गुणसुत्रको ढाँचा हुने व्यक्तिहरू हुन् ।

- स्त्रीलिङ्गी (अङ्ग्रेजीमा : Female sex) भन्नाले योनी (Vagina), पाठेघर लगायत यौनाङ्ग र मुख्यतः XX गुणसुत्रको ढाँचा हुने व्यक्तिहरू हुन् ।

पुलिङ्गी र स्त्रीलिङ्गी दुबै यौन विशेषताका बारेमा निश्चित मान्यता राखिएको र परिभाषित गरिएको छ । तर समाजमा पुलिङ्गी र स्त्रीलिङ्गी यौन विशेषता बाहेकका यौन विशेषता र विविधता भएका मानिसहरू पनि छन् ।

पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषता (यौनाङ्ग, प्रजनन ग्रन्थि तथा गुणसुत्रको ढाँचा) भएका व्यक्तिहरूलाई **अन्तरलिङ्गी व्यक्ति** (अङ्ग्रेजीमा : **Intersex person**) भनिन्छ ।[2,3,4,5,6,7]

**शाब्दिक व्युत्पत्ति**
नेपाली : अन्तर् + लिङ्गी
अङ्ग्रेजी : inter + sex

---

1 sex characteristic, APA Dictionary of Psychology, American Psychological Association
2 Intersex Fact Sheet, United Nations Human Rights Office of the High Commissioner
3 The Terminology of Intersex, 2010, Organization Intersex International
4 Stories of Intersex People from Nepal, 2016
5 Intersex Definitions, 2020, InterAct (Advocates for Intersex Youth)
6 Intersex conditions, 2008, The Intersex Society of North America
7 Yogyakarta Principles +10, 2017, Page 6

संस्कृत भाषामा 'अन्तर्'को अर्थ 'बिचमा' भन्ने लाग्छ ।[8] नेपाली भाषामा उपसर्गका रूपमा 'अन्तर'को प्रयोग माझको वा मध्य भागको भन्ने अभिप्राय जनाउन प्रयोग गरिन्छ ।[9] ल्याटिन भाषामा 'inter' को अर्थ “in between” हो ।[10] अङ्ग्रेजी भाषामा सोही अभिप्राय जनाउन 'inter' लाई उपसर्गका रूपमा प्रयोग गरिन्छ ।[11]

पुलिङ्गी र स्त्रीलिङ्गी शरीरको परम्परागत धारणा बाहेक पनि थुप्रै यौन विशेषताका विविधताहरू छन् । ती सबै विविधताहरूलाई 'अन्तरलिङ्गी विविधता' भनि चिनिन्छ । तसर्थ 'अन्तरलिङ्गी' एउटा छाता शब्द हो ।[2 3 4]

अन्तरलिङ्गी यौन विशेषताका विविधता ४० भन्दा बढी रहेको पाइन्छ । केही विविधताहरू यस प्रकारका छन् :- [3 5 6]
१) बाहिरी यौनाङ्ग योनी हुने र आन्तरिक अण्डकोष हुने,
२) बाहिरी यौनाङ्ग शिश्न हुने र आन्तरिक पाठेघर हुने,
३) शिश्न र योनी दुबै हुने,
४) XXY, XYY, XO/XX, लगायतका गुणसुत्रीय ढाँचा हुने, इत्यादी ।

**ध्यान दिनुपर्ने तथ्य :**

- यौन विशेषता जनाउने शब्दावलीको अन्त्यमा 'लिङ्गी' (जस्तै – अन्तरलिङ्गी) प्रयोग हुन्छ ।

अन्तरलिङ्गी मानिसलाई सम्बोधन गर्नु पर्दा ‘अन्तरलिङ्गी’ मात्र होईन 'अन्तरलिङ्गी व्यक्ति' भनेर सम्बोधन गर्नु सम्मानजनक मानिन्छ । जस्तै : उनी एक अन्तरलिङ्गी व्यक्ति हुन्, उनी अन्तरलिङ्गी व्यक्तिहरूको अधिकारका निम्ति कार्यरत छन् । They are an intersex person, They work for rights of intersex persons.

[8] A Sanskrit-English dictionary, 1899, Clarendon Press, OCLC 458052227, page 43
[9] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ४६
[10] Inter-, Online Etymology Dictionary, https://www.etymonline.com/
[11] Oxford Advanced Learner’s Dictionary, Eight Edition, Oxford University Press, page 811

# लैङ्गिक पहिचान

लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूति तथा अनुभव हो । कुनै व्यक्ति आफू महिला, पुरुष वा त्यस बाहेक केही रहेको अनतरमनको बोध (internal sense) उसको लैङ्गिक पहिचान हो । [12] [13] [14] [15] [16] [17] [18] [19] [20] [21] [22] [23] [24]

कुनै शिशु जन्मने बित्तिकै कतिपय अवस्थामा यौनाङ्गको आधारमा र कतिपय अवस्थामा अभिभावकको इच्छाको आधारमा निजलाई बालक वा बालिका भनेर इङ्गित गरिन्छ, जसलाई जन्मँदा इङ्गित गरिने लैङ्गिकता (अङ्ग्रेजीमा : Gender assigned at birth) भनिन्छ । कुनै शिशु जन्मने बित्तिकै अभिभावक, संरक्षक लगायतका व्यक्तिहरूबाट निज शिशुको लैङ्गिकता निर्धारण गर्ने गरिन्छ । यसरी लैङ्गिकताको निर्धारण गर्दा शिशुको यौनाङ्ग हेरिन्छ, र शिश्न भएमा केटा अनि योनी भएमा केटी भनि उसको लैङ्गिकताको निर्धारण गर्ने गरिन्छ । कतिपय अवस्थामा शिशुको यौनाङ्ग अस्पष्ट रहेको वा शिश्न र यौनी दुबै यौनाङ्ग हुने हुन्छ । यस्तो अवस्थामा निज शिशुको अभिभावकको चाहना अनुसार केटा वा केटी भनि लैङ्गिकताको निर्धारण गर्ने गरिन्छ । यसरी निधार्ण गरिएको अनुसार नै त्यस्ता शिशुहरूलाई हुर्काइन्छ ।

---

[12] Definitions, UN Free & Equal, United Nations Human Rights Office
[13] Transgender Fact Sheet, United Nations Human Rights Office of the High Commissioner
[14] A glossary: Defining transgender terms, September 2018, Vol 49, No. 8, American Psychological Association
[15] Blueprint for the Provision of Comprehensive Care for Trans People and Trans Communities in Asia and The Pacific, 2015, Asia Pacific Transgender Network, page xiii
[16] Transgender Persons (Protection of Rights) Act, 2018, Pakistan, 2. Definitions (f)
[17] Resilient Individuals: Sexual Orientation, Gender Identity & Intersex Rights , 2015, Australian Human Rights Commission
[18] Guidelines for Healthcare providers on Trans Competent Health Care Services for Transgender Patients, Asia Pacific Transgender Network, page 6 - 9
[19] Policy on preventing discrimination because of gender identity and gender expression, 2014, Ontario Human Rights Commission
[20] Gender Identity, Gender Expression and Sex Characteristics Act, Malta, page 1, 2. Gender identity
[21] Glossary, International Lesbian, Gay, Bisexual, Trans and Intersex Association (ILGA) Europe
[22] Sexual Orientation, Gender Identity & Sex Characteristics in International Human Rights Law, Second Edition, United Nations Human Rights Office of the High Commissioner, page 5
[23] Frequently asked questions on health and sexual diversity: an introduction to key concepts, World Health Organization (WHO/FWC/GER/16.2)
[24] New York City Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102(23), II. DEFINITIONS

यसलाई **जन्मँदा पुलिङ्गी इङ्गित गरिएको** (अङ्ग्रेजीमा : **Assigned male at birth**) र **जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएको** (अङ्ग्रेजीमा : **Assigned female at birth**) भनिन्छ । [25]

कुनै पनि शिशुलाई जन्मने बित्तिकै आफ्नो लैङ्गिकताको बारे चेतना हुँदैन । अत: लैङ्गिक पहिचान व्यक्ति हुर्कँदै जाने क्रममा निजले गर्ने आफ्नो लैङ्गिकता प्रतिको अनुभूतीबाट थाहा हुँदै जाने विषय हो ।

## त्याचलैङ्गिक व्यक्ति

यसरी, जन्मँदा जस्तो लैङ्गिकता इङ्गित गरिन्छ र जुन लैङ्गिकतामा हुर्काइन्छ, सोही अनुरूप नै आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान रहँदा ती व्यक्तिहरूलाई **त्याचलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Cisgender person**) भनिन्छ । जन्मँदा केटी/बालिका भनि इङ्गित गरिएको र निजको लैङ्गिक पहिचान पनि महिला हुँदा **त्याचलैङ्गिक महिला** (अङ्ग्रेजीमा : **Cis Woman**) भनिन्छ भने जन्मँदा केटा/बालक भनि इङ्गित गरिएको र निजको लैङ्गिक पहिचान पनि पुरुष हुँदा **त्याचलैङ्गिक पुरुष** (अङ्ग्रेजीमा : **Cis Man**) भनिन्छ । [12 19 21 23 24]

**शाब्दिक व्युत्पत्ति**
नेपाली : त्याच + लैङ्गिक
अङ्ग्रेजी : cis + gender

मराठी भाषामा 'त्याच'को अर्थ 'उही' वा 'the same' भन्ने लाग्छ ।[26] यही अभिप्राय जनाउने संस्कृत वा नेपाली समानार्थी 'सम' हुन्छ ।[27] तर 'समलैङ्गिक' शब्द नेपाली भाषामा अर्कै अर्थ

---

[25] Definitions Related to Sexual Orientation and Gender Diversity in APA Document, American Psychological Association
[26] इंग्रजी मराठी शब्दकोश, https://www.shabdkosh.com/
[27] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ १२४६

जनाउन प्रचलनमा रहेको हुनाले, मराठी भाषाबाट यो शब्द आयात गरिएको हो । ल्याटिन भाषामा 'cis' को अर्थ “on the same side” हो ।[28] अङ्ग्रेजी भाषामा सोही अभिप्राय जनाउन 'cis' लाई उपसर्गका रूपमा प्रयोग गरिन्छ ।[29]

**अङ्ग्रेजी भाषामा प्रयोग गरिने केही समानार्थी शब्दहरू :**

- त्याचलैङ्गिक व्यक्ति - Cisgender person, Cis person.
- त्याचलैङ्गिक महिला - Cisgender woman, Cis woman.
- त्याचलैङ्गिक पुरुष - Cisgender man, Cis man.

## पारलैङ्गिक व्यक्ति

त्यसैगरि, जन्मँदा जस्तो लैङ्गिकता इङ्गित गरिन्छ र जुन लैङ्गिकतामा हुर्काइन्छ, सो भन्दा फरक आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान रहँदा ती व्यक्तिहरूलाई **पारलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Transgender person**) भनिन्छ । जन्मँदा केटी/बालिका भनि इङ्गित गरिएको र निजको लैङ्गिक पहिचान पुरुष हुँदा **पारलैङ्गिक पुरुष** (अङ्ग्रेजीमा : **Trans Man**) भनिन्छ भने जन्मँदा केटा/बालक भनि इङ्गित गरिएको र निजको लैङ्गिक पहिचान महिला हुँदा **पारलैङ्गिक महिला** (अङ्ग्रेजीमा : **Trans Woman**) भनिन्छ ।[30] [31] [12] [19] [21] [23] [24]

**शाब्दिक व्युत्पत्ति**

नेपाली : पार + लैङ्गिक

अङ्ग्रेजी : trans + gender

---

[28] Cis-, Online Etymology Dictionary, https://www.etymonline.com/

[29] New words notes December 2015, Oxford Dictionary, https://public.oed.com/

[30] Blueprint for the Provision of Comprehensive Care for Trans People and Trans Communities in Asia and The Pacific, 2015, Asia Pacific Transgender Network, page xi

[31] SB-179 Gender identity: female, male, or nonbinary, Senate Bill No. 179, California Legislative Information

संस्कृत भाषामा 'पार'को अर्थ 'across, on the other side' भन्ने लाग्छ । नेपाली भाषामा पनि यही अभिप्राय जनाउन प्रयोग गरिन्छ ।[32] ल्याटिन भाषामा 'trāns' को अर्थ “across, on the far side, beyond” हो ।[33] अङ्ग्रेजी भाषामा सोही अभिप्राय जनाउन 'trans' लाई उपसर्गका रूपमा प्रयोग गरिन्छ ।[34]

**अङ्ग्रेजी भाषामा प्रयोग गरिने केही समानार्थी शब्दहरू :**

- पारलैङ्गिक व्यक्ति - Transgender person, Trans person.
- पारलैङ्गिक महिला - Transgender woman, Trans woman.
- पारलैङ्गिक पुरुष - Transgender man, Trans man.

**अक्सर हुने हिज्जे त्रुटि :**

- 'पारा', 'पर’ वा 'परा' होइन । 'पारा'को अर्थ 'तरिका वा ढङ्ग'[35] हो, भने 'पर'को अर्थ 'अर्काको, पराई'[36] हो, र 'परा'को अर्थ 'ठूलो, अगिल्तिर'[37] हो ।
- 'पार' - 'प- आकार, 'र' अकार ।
- त्यसै गरि 'लिङ्गी' होइन । यौनाङ्गसँग सम्बन्धित शब्दावलीको अन्त्यमा मात्र 'लिङ्गी' हुन्छ । लैङ्गिक पहिचान जनाउने शब्दावलीको अन्त्यमा 'लैङ्गिक' हुन्छ ।
- सही हिज्जे - पारलैङ्गिक

माथि उल्लिखित लैङ्गिक पहिचानहरू द्वयसंख्या (binary) अन्तरगत पर्दछन् । महिला र पुरुष दुई लैङ्गिक पहिचानहरूलाई द्वयसांखिक लैङ्गिक पहिचान (अङ्ग्रेजीमा : Binary genders) भनेर भनिन्छ । यी पहिचानहरूमा 'त्याचलैङ्गिक (Cisgender)' र 'पारलैङ्गिक (Transgender)' शब्दहरू केवल वर्णनकर्ता (descriptive) शब्दहरू हुन् । यी दुई शब्दहरूले महिला हुनु वा पुरुष हुनुलाई थप व्याख्या गर्ने काम मात्र गर्दछ ।

---

[32] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ७८२
[33] Trans-, Online Etymology Dictionary, https://www.etymonline.com/
[34] Oxford Advanced Learner’s Dictionary, Eight Edition, Oxford University Press, page 1644
[35] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ७८३
[36] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ७४७
[37] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ७५०

अतः त्याचलैङ्गिक महिला र पारलैङ्गिक महिलाहरू 'महिला' लैङ्गिक पहिचान अन्तरगत पर्दछन् भने त्याचलैङ्गिक पुरुष र पारलैङ्गिक पुरुषहरू 'पुरुष' लैङ्गिक पहिचान अन्तरगत पर्दछन् ।

## गैर-द्वयसांखिक लैङ्गिक पहिचान

यी द्वयसांखिक लैङ्गिक पहिचान बाहेक पनि थुप्रै लैङ्गिक पहिचान भएका व्यक्तिहरू हुन्छन् / छन् । पुरुष वा महिलाको लैङ्गिकता बाहेक पारम्परिक लैङ्गिक भिन्नता सँग सम्बन्धित नरहेका र महिला वा पुरुष लैङ्गिकता दुबै नरहेका, दुबै रहेका वा मिश्रण जनाउने लैङ्गिक पहिचानहरूको विविधतलाई **गैर-द्वयसांखिक** (अङ्ग्रेजीमा : **Non-Binary**) लैङ्गिक पहिचान भनिन्छ । 'गैर-द्वयसांखिक' शब्द एक छाता शब्द हो ।[38] [39] [12] [19] [21] [23] [24] [31]

**शाब्दिक व्युत्पत्ति** : द्वय (अर्थ : दुई) [40] + संख्या + इक = द्वयसांखिक

द्वयसांखिक लैङ्गिक पहिचान बाहेकका विविध लैङ्गिक अनुभूती एवं पहिचानहरूलाई चिनाउन व्यक्तिहरूले विभिन्न शब्दावलीहरूको प्रयोग गर्ने गरेको पाइन्छ ।[41]

चलनचल्तीमा रहेका यस्ता केही लैङ्गिक पहिचान जनाउने शब्दावलीहरू निम्नानुसार रहेका छन् :

- आफूलाई कुनै पनि लैङ्गिकतासँग सम्बन्ध नभएको भनि पहिचान गर्ने व्यक्तिहरूलाई **अलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Agender person**) भनिन्छ ।

[38] Understanding Non-Binary People: How to Be Respectful and Supportive, National Center for Transgender Equality, US
[39] Non-Binary Inclusion, 2017, LGBT Foundation (charity no. 1070904)
[40] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ६४९
[41] Genderqueer and Non-binary Identities, https://genderqueerid.com/gq-terms

- महिला र पुरुष दुबै भएको भनि पहिचान गर्ने व्यक्तिहरूलाई **दुईलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Bigender person**) भनिन्छ ।
- तरल वा परिवर्तनशील लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई **द्रवलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Genderfluid person**) भनिन्छ ।
- आधि रूपमा एउटा लैङ्गिकता सँग सम्बन्ध राख्ने, र आधि रूपमा भने तरल लैङ्गिकता भएका व्यक्तिहरूलाई **अर्धलैङ्गिक व्यक्ति** (अङ्ग्रेजीमा : **Demigender person**) भनिन्छ ।

**शाब्दिक व्युत्पत्ति**

- 'अ-' : संस्कृत मूल रहेको कुनै शब्द व्यञ्जन आदि हुँदा लाग्ने अकरण जनाउने उपसर्ग[42]
- 'a-' : ग्रीसेली भाषाको वर्णमालामा पहिलो अक्षर 'ἀ'बाट व्युत्पत्ति भएको अकरण जनाउने उपसर्ग, negating prefix [43] [44]
- 'दुई-' : दुई
- 'bi-' : ल्याटिन भाषाको 'bi' जसको अर्थ 'दुई वा दोब्बर' हुन्छ ।[45] [46]
- 'द्रव' : संस्कृत मूल रहेको 'तरल' अर्थ जनाउने ।[47]
- 'अर्ध' : संस्कृत मूल रहेको 'आधा' अर्थ जनाउने ।[48]
- 'demi-' : पुरानो फ्रान्सेली भाषामा 'demi'को अर्थ आधा रहेको ।[49] [50]

---

[42] A Sanskrit-English dictionary, 1899, Clarendon Press, OCLC 458052227, page 1
[43] a-, Online Etymology Dictionary, https://www.etymonline.com/
[44] Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 3
[45] bi-, Online Etymology Dictionary, https://www.etymonline.com/
[46] Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 132
[47] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौं संस्करण, विसं २०७७, पृष्ठ ६४८
[48] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौं संस्करण, विसं २०७७, पृष्ठ ७३
[49] demi-, Online Etymology Dictionary, https://www.etymonline.com/
[50] Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 403

**ध्यान दिनुपर्ने तथ्य :**

- लैङ्गिक पहिचान जनाउने शब्दावलीको अन्त्यमा 'लैङ्गिक' (जस्तै - पारलैङ्गिक, त्याचलैङ्गिक, अलैङ्गिक, द्रवलैङ्गिक इत्यादी) प्रयोग हुन्छ ।

- पारलैङ्गिक र त्याचलैङ्गिक शब्दावलीहरूलाई एकल रुपमा प्रयोग गर्न मिल्दैन । जस्तै :- 'ऊ पारलैङ्गिक हो, उनिहरू पारलैङ्गिकहरू हुन्, They are transgenders' । यसरी प्रयोग गर्नुलाई अपमानजनक प्रयोग मानिन्छ । यी शब्दावली पछि 'व्यक्ति' नामपद अनिवार्य थप्नु पर्ने हुन्छ । जस्तै :- ऊ पारलैङ्गिक व्यक्ति हो, उनीहरू पारलैङ्गिक व्यक्तिहरू हुन्, They are a transgender person, They are transgender persons. I

- पारलैङ्गिक र त्याचलैङ्गिक शब्दावलीहरू विशेषण हुन् र महिला तथा पुरुष नामपदलाई वर्णन गर्न प्रयोग गरिन्छ । जस्तै - पारलैङ्गिक महिला, पारलैङ्गिक पुरुष, त्याचलैङ्गिक महिला, त्याचलैङ्गिक पुरुष ।

- 'गैर-द्वयसांखिक' शब्दावलीको प्रयोग महिला र पुरुष चिनाउन नभई महिला पुरुष बाहेकको लैङ्गिक पहिचान चिनाउने शब्द भएकाले "व्यक्ति" नामपद अनिवार्य थप्नु पर्ने हुन्छ । जस्तै: गैर-द्वयसांखिक व्यक्ति, अलैङ्गिक व्यक्ति, द्रवलैङ्गिक व्यक्ति, इत्यादी ।

- Trans woman, Trans man भन्दा 'Trans' भनेको 'Transgender' को छोटकरी मात्र हो । यी दुई छुट्टै शब्दहरू हुन् । 'Trans' एउटा वर्णात्मक शब्द र 'Man, Woman' लैङ्गिकता जनाउने शब्द हुन्, र लैङ्गिक तटस्थ शब्द 'person' । त्यसैले यी शब्दहरू जोडेर 'Transwoman, Transman, Transperson' लेख्न उचित छैन र Trans woman, Trans man, Trans person भनेर लेख्न उचित रहन्छ ।

## अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान

अन्तरलिङ्गी एउटा यौन विशेषता हो । अन्तरलिङ्गी व्यक्तिहरूको पनि अरु व्यक्तिहरू सरह आफ्नो लैङ्गिकता सम्बन्धी स्वःअनुभूती हुँदछ । । अन्तरलिङ्गी व्यक्तिहरू आफ्नो लैङ्गिकता प्रतिको अनुभूती अनुसार आफूलाई महिला, पुरुष वा गैर-द्वयसांखिक भनि पहिचान गर्दछन् । कतिपय अन्तरलिङ्गी विशेषताहरू जन्मँदाकै अवस्थामा देखिन्छ भने कतिपयको किशोरावस्थामा मात्र देखिने हुन्छ । त्यसैगरि कतिपय अन्तरलिङ्गी विशेषताका व्यक्तिहरूको यौन विशेषता बाहिरी शारिरिक रूपमा नदेखिने पनि हुनसक्छ ।

हाम्रो सामाजिक प्रचलन अनुसार जन्मँदाको यौनाङ्गको आधारमा केटा वा केटी भनि इङ्गित गरिने हुनाले अस्पष्ट यौनाङ्ग वा दुबै यौनाङ्ग भएका बच्चाहरूलाई कसरी हुर्काइन्छ भन्ने विषय उनीहरूको पारिवारिक, सामाजिक तथा सांस्कृतिक वातावरण लगायत अभिभावक वा संरक्षकको छनोट वा इच्छामा भर पर्दछ ।

कुनै अन्तरलिङ्गी बच्चालाई केटा भनि हुर्काइएको छ र उसको स्वःअनुभूतीको लैङ्गिक पहिचान पनि पुरुष नै हुन्छ वा कुनै अन्तरलिङ्गी बच्चालाई केटी भनि हुर्काइएको छ र उसको स्वःअनुभूतीको लैङ्गिक पहिचान पनि महिला नै हुन्छ भने **अन्तरलिङ्गी यौन विशेषतामा त्याचलैङ्गिक व्यक्ति** भनि वर्णन गर्न सकिन्छ ।

कुनै अन्तरलिङ्गी बच्चालाई केटा भनि हुर्काइएको छ र उसको स्वःअनुभूतीको लैङ्गिक पहिचान सो भन्दा फरक अर्थात् महिला हुन्छ वा कुनै अन्तरलिङ्गी बच्चालाई केटी भनि हुर्काइएको छ र उसको स्वःअनुभूतीको लैङ्गिक पहिचान पनि सो भन्दा फरक अर्थात् पुरुष हुन्छ भने यसलाई **अन्तरलिङ्गी यौन विशेषतामा पारलैङ्गिक व्यक्ति** भनि वर्णन गर्न सकिन्छ ।

अन्तरलिङ्गी व्यक्तिहरू आफ्नो लैङ्गिकता प्रतिको स्वःअनुभूती अनुसार आफूलाई महिला वा पुरुष भनि पहिचान गर्न सक्छन् । त्यसैगरि कतिपय अन्तरलिङ्गी व्यक्तिहरू आफूलाई महिला

वा पुरुष दुबै लैङ्गिकतामा नअटाउने लैङ्गिक पहिचान भएको व्यक्ति अर्थात् **गैर-द्वयसांखिक (Non-binary)** व्यक्ति भनि पहिचान गर्दछन् ।[2]

## लैङ्गिक पहिचान सम्बन्धी ध्यान दिनुपर्ने तथ्यहरू :-

- प्रत्येक व्यक्तिको लैङ्गिक पहिचान निजको स्व:अनुभूती र आत्मनिर्णयको आधारमा निर्धारण हुने विषय हो ।
- व्यक्तिको इच्छाविपरीत, जबरजस्ती वा निज व्यक्तिले पहिचान नै नगर्ने लैङ्गिकता वा लैङ्गिकताबोधक शब्दको प्रयोग गर्नु लैङ्गिक हिंसाको एक स्वरूप हो ।
- व्यक्तिले आफ्नो लैङ्गिकतालाई कसरी पहिचान गर्छ वा आफ्नो लैङ्गिकतालाई कसरी परिभाषित वा व्याख्या गर्छ भन्ने विषय निज व्यक्तिको अन्तरनिहित आत्मनिर्णयको अधिकारको विषय हो ।
- उदाहरणका लागि अधिकांश पारलैङ्गिक महिलाहरू आफूलाई सँधै केटी/महिला र पारलैङ्गिक पुरुषहरू आफूलाई सँधै केटा/पुरुषकै रूपमा अनुभूति गर्ने गरेको बताउँछन् । परिवार तथा समाजले पारलैङ्गिक महिलालाई उनीहरूको यौनाङ्गका आधारमा केटा र पारलैङ्गिक पुरुषलाई उनीहरूको यौनाङ्गका आधारमा केटी भनि हुर्काए तापनि निज व्यक्तिहरू सँधै आफूलाई पारलैङ्गिक महिला भए महिला र पारलैङ्गिक पुरुष भए पुरुष भनि नै अनिभूती गरेका हुन्छन् । पारलैङ्गिक व्यक्तिहरूलाई 'पुरुषबाट महिला भएको' वा 'महिलाबाट पुरुष भएको' भनि व्याख्या गर्न मिल्दैन । यसो गरिनु अपमानजनक हुनका साथै यस्ता व्याख्याहरूले पारलैङ्गिक व्यक्तिहरूको अनुभवलाई वहिष्करणमा पार्छ । त्याचलैङ्गिक व्यक्तिहरूकै अनुभवलाई केन्द्रमा राखि पारलैङ्गिक व्यक्तिहरूको व्याख्या गर्नु न्यायसंगत हुँदैन ।

- कुनै पनि शिशुमा जन्मने बित्तिकै लैङ्गिकताको चेतना हुँदैन । शिशु अवस्थामा उनीहरूलाई यौनाङ्गको आधारमा सामाजिक मान्यता अनुसार अभिभावकहरूले लैङ्गिकता निर्धारण गरेर हुर्काइन्छ । तर ती व्यक्तिहरूको अन्तरबोधको लैङ्गिकता वा स्वःअनुभूतीको लैङ्गिकता त्यस भन्दा फरक पनि हुन सक्छ । हाम्रो समाजमा अझै सम्म पनि लैङ्गिक विविधता बारे व्यापक बुझाई वा जनचेतना छैन । र त्यसरी कुनै व्यक्ति सामाजिक मान्यता भन्दा फरक लागेमा उसलाई नानाथरीका अपमान, विभेद, हिंसा र लाञ्छना हुने गर्दछ । त्यसैले सर्वप्रथम त व्यक्ति स्वयंलाई आफ्नो बारेमा स्वःयकीन हुन समय लाग्न सक्छ भने आफू आफ्नो लैङ्गिक पहिचानमा विश्वस्त भएतापनि समाजमा खुलेर जीवनयापन गर्ने अनुकूल वातावरण नपाए सम्म खुल्न सक्ने अवस्था पनि हुँदैन । यसमा ती व्यक्तिको सामाजिक, सांस्कृतिक, भौगोलिक, धार्मिक, भाषिक, आर्थिक लगायतका पृष्ठभूमीले पनि प्रभाव पार्छ । कतिपय व्यक्तिहरू सानै उमेर देखि आफू समाजले भनेको जस्तो होइन भनेर बुझ्दा पनि यस विषयमा व्यापक शिक्षा तथा स्रोत सामाग्रीको पहुँच नहुनाले स्वःविश्वस्त हुन र आफू के हुँ, आफूलाई किन यस्तो अनुभव हुन्छ भन्ने अलमलमा पर्ने अवस्था समेत हुन सक्छ । कतिपय व्यक्तिहरूलाई यस विषयमा व्यापक भरपूर स्रोत सामाग्रीको पहुँच छ भने आफू स्वःविश्वस्त हुन पनि सजिलो हुन सक्छ । त्यसैगरि आफू स्वःविश्वस्त हुँदैमा अरुलाई बताउन सक्ने वा खुलेर जीवनयापन गर्न सक्ने स्थिति हुन्छ भन्ने छैन । घरपरिवार, साथी, आफन्त, टोलछिमेक, समाज, विद्यालय, कार्यस्थल लगायतका क्षेत्रहरूमा उपयुक्त वातावरण हुने नहुने विषयले पनि व्यक्तिको आफ्नो लैङ्गिक पहिचान अनुसार स्वतन्त्र रूपले जीवनयापन गर्नमा प्रभाव पार्ने गर्दछ । यसरी कुनै व्यक्तिले अन्ततः आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्न थाल्दा ऊ एउटाबाट अर्कोमा परिवर्तन भएको होइन, ऊ जे हो त्यो कुरा मात्र बताएको हो ।

# केही महत्वपूर्ण शब्दावलीहरू

**अन्तरण**

पारलैङ्गिक व्यक्ति लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरूद्वारा परिवार तथा समाजले हुर्काएको लैङ्गिकताबाट क्रमशः आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसारको जीवनयापनका लागि  अपनाइने विभिन्न प्रक्रियाहरूको समयावधिलाई **अन्तरण** (अङ्ग्रेजीमा : **Transition**) भनिन्छ ।[51] यस्तो अन्तरणको समयावधि वा प्रक्रिया प्रत्येक व्यक्तिका लागि फरक-फरक हुन सक्छ । कुन व्यक्तिले कहिले, कुन अवस्था र उमेरमा, कसरी र के तरिकाले अन्तरणका प्रक्रियाहरू अपनाउँछन् वा पार गर्छन् भन्ने विषय सम्बन्धित व्यक्तिको नितान्त वैयक्तिक निर्णयको विषय हो । [52] [53]

**सामाजिक अन्तरण** (अङ्ग्रेजीमा: **Social transition**) अन्तरगत सामाजिक पक्षका अन्तरणहरू पर्दछन् । यसमा थप प्रष्टताको लागि निम्न तथ्यहरू सहयोगी हुन सक्छन् :- [54]

- लैङ्गिक पहिचान अनुरूपको पहिरन लगाउन सुरु गर्ने;
- अभिभावक वा संरक्षकले शिशु अवस्थामा राखिदिएको नाम आफ्नो लैङ्गिक पहिचान प्रतिकूल भएमा त्यस नामलाई त्याग गर्ने र लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नामको छनोट गरि प्रयोग गर्ने;
- व्यक्तिगत परिचय जनाउने कागज प्रमाण (जस्तै नागरिकता, शैक्षिक प्रमाणपत्र, राहदानी, इत्यादी) लगायत सामाजिक संजालहरूमा पनि लैङ्गिक पहिचान अनुसारको नाम, लैङ्गिकता, शीर्षक (जस्तैः Mr., Ms., Mx.), सर्वनाम (जस्तै he, she, they) को प्रयोग गर्ने;

[51] Blueprint for the Provision of Comprehensive Care for Trans People and Trans Communities in Asia and The Pacific, 2015, Asia Pacific Transgender Network, page xiii
[52] Transition, TransWhat?, https://transwhat.org/transition/
[53] Frequently Asked Questions about Transgender People, National Center for Transgender Equality, US
[54] Social Transition, TransWhat?

**चिकित्सकीय अन्तरण** (अङ्ग्रेजीमा: **Medical transition**) अन्तरगत चिकित्सकीय पक्षका अन्तरणहरू पर्दछन् । यस विषयमा निम्न तथ्यहरूबाट थप प्रष्ट हुन सकिन्छ :- [55]

- हर्मोन प्रतिस्थापन थेरापि (Hormone Replacement Therapy);
- रौँ हटाउने वा उमार्ने प्रक्रिया;
- स्तन प्रत्यारोपण वा स्तन हटाउने शल्यक्रिया;
- पाठेघर हटाउने शल्यक्रिया;
- स्वर परिवर्तन शल्यक्रिया वा थेरापि;
- यौनाङ्ग पुनःनिर्माण शल्यक्रिया (Sex organs reconstruction surgery); इत्यादी

**चिकित्सकीय अन्तरणमा** अपनाइने यी विभिन्न विधिहरूलाई *Gender affirming health services* पनि भनिन्छ । [56] [57] [21]

- कतिपय पारलैङ्गिक व्यक्तिहरूले चिकित्सकीय अन्तरण गर्न चाहन्छन् भने कतिपयले चाहँदैनन् । साथै कतिले चाहेर पनि आर्थिक लगायतका कारणले यस्तो चिकित्सकीय अन्तरण गर्न सक्ने अवस्था नहुन सक्छ ।
- चिकित्सकीय अन्तरण प्रक्रियाहरू वैयक्तिक इच्छा र निर्णयको विषय हो । आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार चिनिन वा जिवनयापन गर्नका लागि यस्ता विधिहरू अपनाउनै पर्छ भन्ने छैन ।
- पारलैङ्गिक व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचानमा चिनिनकै लागि यस किसिमका चिकित्सकीय प्रक्रियाहरू पुरा गर्नैपर्छ भन्ने बाध्यकारी अवस्था सृजना गर्नु वा यस्तो प्रक्रियाहरू गर्नै पाउँदैन भन्ने निषेधात्मक अवस्थाको सृजना गर्नु पारलैङ्गिक व्यक्तिहरूको शारीर माथिको अधिकार, स्वायत्तता (Bodily integrity & autonomy) र मानव अधिकारको उल्लंघनजन्य कार्य हो ।

---

[55] Glossary of Transgender Terms, 2018, Johns Hopkins University

[56] Guidelines for Gender Affirming Healthcare, for Gender Diverse and Transgender Children and Adults in Aotearoa New Zealand, 2018, ISBN: 978-0-473-45837-9

[57] What is gender-affirmative health care?, WHO/Europe brief – transgender health in the context of ICD-11, World Health Organization Europe

**मृतनाम**

प्रत्येक व्यक्ति जन्मने बित्तिकै उसलाई उसका अभिभावक / संरक्षकद्वारा एउटा नाम दिइन्छ। नेपालका अधिकांश समाजहरूमा व्यक्तिको नाम लैङ्गिकता-युक्त (gendered) हुन्छ। ती सामाजिक परिवेशमा व्यक्तिको नामबाट पनि उसको लैङ्गिकता चिनिन्छ। त्यसैले पारलैङ्गिक व्यक्तिहरू लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्न र चिनाउन सुरु गरिसकेपछि आफूलाई शिशु आवस्थामा दिइएको नामले उनीहरूको लैङ्गिक पहिचानलाई सही प्रतिनिधित्व गर्न नसकेमा त्यस नामबाट चिनिन वा चिनाउन नचाहने हुन सक्छन्। यस्तो अवस्थामा व्यक्तिले आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नाम छनोट र प्रयोग गर्न चाहन्छन्। अतः त्यसरी व्यक्तिले आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नाम छनोट गरिसकेपछि आफूलाई शिशु अवस्थामा राखिदिएको नाम त्याग्छन् र त्यही त्यागिएको नामलाई **मृतनाम** (अङ्ग्रेजीमा: **Deadname**) भनिन्छ।[58] [59]

अधिकांश पारलैङ्गिक व्यक्तिहरूका लागि मृतनाम भन्नाले बितिसकेको समय, पहिचान विपरीतको परिचय भएकाले मृतनामबाट सम्बोधित हुने कुरा अपमानको विषय हुन्छ। कतिपय पारलैङ्गिक व्यक्तिहरूको स्वःअनुभूती अनुसारको लैङ्गिक पहिचानमा जीवनयापन गर्नु अघिको जीवनकालमा त्रासमय, यातनापूर्ण र अपमानजनक अनुभवहरू हुन सक्छन्। ती व्यक्तिहरूलाई मृतनामको प्रयोग र सम्बोधनले पुनःआघात (re-traumatize) गर्न सक्छ। कुनै पनि व्यक्तिलाई उसको मृतनामले सम्बोधन गर्नु उसको अस्तित्वलाई नै नकार्नु र उसले आफूलाई स्थापित गर्न चाहेको परिचय एवं पहिचानबाट निषेध गर्नु हो। त्यसैगरि कुनै पनि व्यक्तिको इच्छा विरुद्व वा सहमति नलिई मृतनाम सार्वजनिक गरिनु निजको गोपनीयताको अधिकारको उल्लंघनका साथसाथै त्यस्तो कार्यले व्यक्तिको सामाजिक स्वीकार्यता एवं सामाजिक-मनोवैज्ञानिक स्वास्थ्यमा नै प्रतिकूल प्रभाव पार्दछ। यसका साथै कुनैपनि व्यक्तिलाई उसको इच्छा विपरीत वा असहमति हुँदाहुँदै मृतनामबाट सम्बोधन गर्ने वा लिखित, मौखिक एवं साङ्केतिक रुपमा प्रयोग गर्ने कार्य लैङ्गिक हिंसा अन्तरगत पर्दछ।

[58] Dictionary.com
[59] Cambridge Online Dictionary

**लैङ्गिक दुस्बोधन**

कुनै पनि व्यक्ति, विशेष गरि पारलैङ्गिक व्यक्ति लगायतका विविध लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई, उनीहरूको लैङ्गिक पहिचान वा उनीहरूले आफूलाई सम्बोधन गर्दा प्रयोग गर्न अनुरोध गरेका लैङ्गिकताबोधक शब्द-शब्दावली प्रतिकूल सम्बोधन गर्ने कार्यलाई **लैङ्गिक दुस्बोधन** (अङ्ग्रेजीमा: **Misgender**) भनिन्छ । [59]

अधिकांश पारलैङ्गिक व्यक्तिहरू लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरूको लागि पहिचान विपरीत वा प्रतिकूलको लैङ्गिक शब्दावलीहरूबाट सम्बोधित हुने कुरा अपमानको विषय हुन्छ । कतिपय पारलैङ्गिक व्यक्तिहरूको स्वःअनुभूती अनुसारको लैङ्गिक पहिचानमा जीवनयापन गर्नु अघिको जीवनकालमा त्रासमय, यातनापूर्ण र अपमानजनक अनुभवहरू हुन सक्छन् । यस्ता लैङ्गिक दुस्बोधनजन्य कार्यले ती व्यक्तिलाई आफ्नो विगत सम्झिन बाध्य बनाउन पनि सक्छ । कुनै पनि व्यक्तिलाई उसको लैङ्गिक पहिचान विपरीत वा प्रतिकूलको लैङ्गिक शब्दावलीहरूबाट सम्बोधन गर्नु उसको अस्तित्वलाई नै नकार्नु र उसले आफूलाई स्थापित गर्न चाहेको परिचय एवं पहिचानबाट निषेध गर्नु हो । लैङ्गिक दुस्बोधनजन्य कार्य पनि लैङ्गिक हिंसा अन्तरगत पर्दछ ।

# यौन अभिमुखिकरण / झुकाव

कुनै व्यक्ति कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक (sexual and romantic) आकर्षण महसुस गर्दछ भन्ने विषय निजको **यौन अभिमुखिकरण / झुकाव** (अङ्ग्रेजीमा : **Sexual Orientation**) हो । प्रत्येक व्यक्तिको यौनिक तथा कामुक अनुभूती एवं अभिव्यक्तिको विशाल दायरालाई **यौनिकता** (अङ्ग्रेजीमा: **Sexuality**) भनिन्छ । व्यक्तिको यौनिकता अन्तरगत यौन अभिमुखिकरण एउटा हिस्सा हो । [7 12 17 21 22 23 24 25]

यौन अभिमुखिकरणका केही विविधताहरू यस प्रकारका छन् :-

**विषमयौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Heterosexual person**) : आफू भन्दा विपरीत वा फरक लैङ्गिकताका व्यक्ति तर्फ मात्र यौन तथा प्रणयात्मक आकर्षण हुने व्यक्तिलाई विषमयौनिक व्यक्ति भनिन्छ । महिलालाई पुरुष प्रति र पुरुषलाई महिला प्रति यौन तथा प्रणयात्मक आकर्षण हुनु विषमयौनिकता हो । विषमयौनिक व्यक्तिहरूलाई अङ्ग्रेजीमा **'Straight person'** पनि भनिन्छ ।

शाब्दिक व्युत्पत्ति : विषम (संस्कृत - विपरीत, उस्तै नरहेको)[60], hetero (ग्रीसेली - héteros - different)[61 62]

**समयौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Homosexual person**) : उस्तै लैङ्गिकताका व्यक्ति तर्फ मात्र यौन तथा प्रणयात्मक आकर्षण हुने व्यक्तिलाई समयौनिक व्यक्ति भनिन्छ । महिलालाई महिला प्रति र पुरुषलाई पुरुष प्रति यौन तथा प्रणयात्मक आकर्षण हुनु समयौनिकता हो । अङ्ग्रेजी भाषामा समयौनिक पुरुषहरूलाई **'Gay'** र समयौनिक महिलाहरूलाई **'Lesbian'** पनि भनिने गरिन्छ ।

---

[60] नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ११९०
[61] Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 729
[62] Hetero-, Online Etymology Dictionary, https://www.etymonline.com/

शाब्दिक व्युत्पत्ति : सम (संस्कृत - उस्तै, त्यही, same)[63], homo (ग्रीसेली - homós - same)[64] [65]

**नोट:**

- 'समयौनिक' (Homosexual) भन्नाले उस्तै लैङ्गिकताका व्यक्तिहरू प्रति आकर्षण हुने व्यक्ति भनि बुझिन्छ । 'समलैङ्गिक' (Same gender) भन्नाले उस्तै लैङ्गिकताका व्यक्तिहरू भन्ने बुझिन्छ । जस्तै पुरुष-पुरुष जोडी 'समलैङ्गिक जोडी' भन्न सकिन्छ किनभने दुबै जना एउटै लैङ्गिकताका व्यक्तिहरू हुन् । अब ती दुई पुरुषहरू मध्ये दुबै समयौनिक हुन सक्छन्, कुनै एक समयौनिक र अर्को द्वियौनिक हुन सक्छन्, दुबैजना द्वियौनिक हुन सक्छन्, इत्यादी । शब्दार्थको भिन्नता बुझेर सन्दर्भ अनुसार प्रयोग गर्नुहोला ।

**द्वियौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Bisexual person**) : आफू भन्दा फरक र आफू जस्तै / उस्तै लैङ्गिकताका व्यक्ति दुबै तर्फ यौन तथा प्रणयात्मक आकर्षण हुने व्यक्तिलाई द्वियौनिक व्यक्ति भनिन्छ ।

शाब्दिक व्युत्पत्ति : द्वि (संस्कृत - दुई)[66], bi (ल्याटिन - bis - two, paired, both)[45] [46]

**सर्वयौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Pansexual person**) : सबै लैङ्गिकताका व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक आकर्षण हुने व्यक्तिलाई सर्वयौनिक व्यक्ति भनिन्छ । सर्वयौनिक व्यक्तिहरू सबै लैङ्गिकताका मानिस प्रति आकर्षण महसुस गर्दछन् र कुनै निश्चित लैङ्गिकता तर्फ मात्र आकर्षण हुन्छ भन्ने हुँदैन ।

शाब्दिक व्युत्पत्ति : सर्व (संस्कृत - सबै, सारा, all)[67], pan (ग्रीसेली - all)[68] [69]

---

63 नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ १२४६
64 Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 746
65 Homo-, Online Etymology Dictionary, https://www.etymonline.com/
66 नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ ६५०
67 नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौँ संस्करण, विसं २०७७, पृष्ठ १२७१
68 Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 1098
69 Pan-, Online Etymology Dictionary, https://www.etymonline.com/

**द्रवयौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Person with fluid sexual orientation**) : तरल वा परिवर्तनशील यौन अभिमुखिकरण भएका व्यक्तिलाई द्रवयौनिक व्यक्ति भनिन्छ । द्रवयौनिक व्यक्तिहरूको कुनै एउटा निश्चित लैङ्गिकता तर्फ मात्र आकर्षित नहुनका साथै यो भावना तरल एवं परिवर्तनशील हुने, कहिले कुनै लैङ्गिकता(हरू) तर्फ आकर्षित हुने र कहिले अरु नै लैङ्गिकता(हरू) तर्फ आकर्षित हुन सक्ने, तरल वा परिवर्तनशील यौन अभिमुखिकरण भएका व्यक्तिहरू द्रवयौनिक व्यक्ति हुन् ।

शाब्दिक व्युत्पत्ति : द्रव (नेपाली - तरल)[47]

**अयौनिक व्यक्ति** (अङ्ग्रेजीमा : **Asexual person**) : कुनै प्रकारको यौन आकर्षण महसुस नहुने, कुनै प्रकारको यौन चाहना नहुने वा अतिन्यून यौन आकर्षण/चाहना हुने व्यक्तिलाई अयौनिक व्यक्ति भनिन्छ ।

शाब्दिक व्युत्पत्ति : अ (संस्कृत - अकरण जनाउने उपसर्ग), pan (ग्रीसेली - ἀ- - negating prefix, opposite of) [43 44]

**पारलैङ्गिक तथा अन्तरलिङ्गी व्यक्तिहरूको यौन अभिमुखिकरण**

यस अध्याय अघिको 'लैङ्गिक पहिचान' अध्यायमा पारलैङ्गिक र अन्तरलिङ्गी व्यक्तिहरू बारे व्याख्या गरिएको छ । हाम्रो डिफल्ट बुझाई अनुसार महिला पुरुष भन्नाले केवल त्याचलैङ्गिक महिला पुरुषहरूलाई मात्र कल्पना गर्ने गर्दछ । तथापि महिला पुरुष भन्नाले पारलैङ्गिक महिला र पारलैङ्गिक पुरुष एवं अन्तरलिङ्गी महिला र अन्तरलिङ्गी पुरुष पनि हुन् ।

जस्तै:- कोही पारलैङ्गिक महिला - पुरुष तर्फ आकर्षण महसुस गर्छन् भने ऊ विषमयौनिक, अरु महिलाहरू तर्फ आकर्षण महसुस गर्छन् भने ऊ समयौनिक व्यक्ति, महिला पुरुष दुबै

तर्फ आकर्षण महसुस गर्छन् भने ऊ द्वियौनिक व्यक्ति इत्यादी । कोही पारलैङ्गिक पुरुष - महिला तर्फ आकर्षण महसुस गर्छन् भने ऊ विषमयौनिक, अरु पुरुषहरू तर्फ आकर्षण महसुस गर्छन् भने ऊ समयौनिक व्यक्ति, महिला पुरुष दुबै तर्फ आकर्षण महसुस गर्छन् भने ऊ द्वियौनिक व्यक्ति इत्यादी । कोही अन्तरलिङ्गी महिला - पुरुष तर्फ आकर्षण महसुस गर्छन् भने ऊ विषमयौनिक, अरु महिलाहरू तर्फ आकर्षण महसुस गर्छन् भने ऊ समयौनिक व्यक्ति, महिला पुरुष दुबै तर्फ आकर्षण महसुस गर्छन् भने ऊ द्वियौनिक व्यक्ति इत्यादी । कोही अन्तरलिङ्गी पुरुष - महिला तर्फ आकर्षण महसुस गर्छन् भने ऊ विषमयौनिक, अरु पुरुषहरू तर्फ आकर्षण महसुस गर्छन् भने ऊ समयौनिक व्यक्ति, महिला पुरुष दुबै तर्फ आकर्षण महसुस गर्छन् भने ऊ द्वियौनिक व्यक्ति इत्यादी ।

**ध्यान दिनुपर्ने तथ्य :**

- यौन अभिमुखिकरण शब्दावलीको अन्त्यमा 'यौनिक' (जस्तै: समयौनिक, द्वियौनिक, सर्वयौनिक) प्रयोग हुन्छ ।
- समयौनिक, द्वियौनिक, सर्वयौनिक लगायतका शब्दहरू विशेषण शब्द हुन् ।
- कुनै पनि मानिसलाई सम्बोधन गर्नु पर्दा अनिवार्य रूपमा 'व्यक्ति' भन्ने शब्दको प्रयोग गरौँ । जस्तै : उनी एक समयौनिक व्यक्ति हुन्, उनी द्वियौनिक व्यक्तिहरूको अधिकारका निम्ति कार्यरत छन् ।
- यौन अभिमुखिकरणलाई यौनिकता नामपदको रूपमा पनि प्रयोग गरिन्छ । जस्तै: Homosexuality - समयौनिकता, Heterosexuality - विषमयौनिकता, Bisexuality - द्वियौनिकता, इत्यादी ।
- नामपद र विशेषण युक्त शब्दावलीहरूको अर्थ र प्रयोग सन्दर्भ फरक छन् । 'समयौनिकता' नामपदले उक्त आकर्षणको भावनालाई जनाउँछ भने ती आकर्षणको भावना हुने व्यक्तिहरूलाई 'समयौनिक व्यक्ति' भनेर जनाइन्छ ।

# छाता शब्द

## ध्यान दिनुपर्ने तथ्य :

- यौन विशेषता जनाउने शब्दावलीको अन्त्यमा 'लिङ्गी' : जस्तै – अन्तरलिङ्गी ।
- लैङ्गिक पहिचान जनाउने शब्दावलीको अन्त्यमा 'लैङ्गिक' : जस्तै - पारलैङ्गिक, त्याचलैङ्गिक, अलैङ्गिक, इत्यादी ।
- यौन अभिमुखिकरण जनाउने शब्दावलीको अन्त्यमा 'यौनिक' : समयौनिक, द्वियौनिक, सर्वयौनिक, इत्यादी ।

र 'यौन विशेषता', 'लैङ्गिक पहिचान' अनि 'यौन अभिमुखिकरण' तीन फरक-फरक विषयहरू हुन् ।

## यौभिकयौता

हामीले यस पुस्तकमा कुरा गरेका तीन विषय : **यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता** (अङ्ग्रेजीमा : **Sexual Orientation, Gender Identity & Sex Characteristics**) भनि एउटा छाता शब्दावलीको रूपमा प्रयोग गरिन्छ ।

**संक्षेपिकरण :**

- अङ्ग्रेजीमा : SOGIESC (उच्चारण : सोजिसेक् )
- नेपालीमा : यौभिकयौता (**यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता**)

नेपाली भाषामा प्रत्येक शब्दको सुरुको अक्षर प्रयोग गर्दा क्लिष्ट हुने र कर्णप्रिय नहुने भएकाले शब्दको विभिन्न ठाउँबाट अक्षर झिकेर याद गर्न सरल र कर्णप्रिय संक्षेपिकरणका रूपमा विकास गरिएको हो ।

# सिमान्तकृत समूह

सबै मानिसहरूको यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता हुन्छ । तर केही विशेष यौन अभिमुखिकरण, केही विशेष लैङ्गिक पहिचान र केही विशेष यौन विशेषता भएका व्यक्तिहरू सामाजिक, संरचनात्मक एवं व्यवस्थात्मक विभेद, लाञ्छना, हिंसा, उत्पीडन लगायतका सिमान्तिकरणहरू भोग्दछन् ।

ती सिमान्तकृत विविधताहरूलाई '**सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति**' (अङ्ग्रेजीमा : **People of Marginalized Sexual Orientation, Gender Identity and Sex Characteristics**) भन्ने छाता शब्दको प्रयोग गरिन्छ । यसको अङ्ग्रेजी संक्षेपिकरण PoMSOGIESC (उच्चारण : पोम् – सोजिसेक्) हो । यस शब्दावलीलाई हामी यस पुस्तकका लेखक तथा प्रकाशक संस्थाहरूले प्रचलनमा ल्याएका हौँ ।

सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति भन्नाले यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र/वा यौन विशेषताका आधारमा सामाजिक सिमान्तिकरणमा परेका व्यक्तिहरूलाई जनाउने छाता शब्द हो । यौन अभिमुखिकरणमा विषमयौनिकता बाहेकका विविधताहरू, लैङ्गिक पहिचानमा त्याचलैङ्गिक व्यक्तिहरू बाहेकका विविधताहरू र यौन विशेषतामा अन्तरलिङ्गी विविधताका व्यक्तिहरूलाई यो छाता शब्दले जनाइन्छ ।

यद्यपि सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको पहिचान उनीहरूको यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका आधारमा मात्र हुन्छ भन्ने छैन । जात, जातीयता, भाषा, अपङ्गता, क्षेत्रियता, आर्थिक अवस्था लगायतका पहिचान(हरू)ले पनि त्यस व्यक्तिको समाजिक र संरचनात्मक विशेषाधिकार (privilege) तथा सिमान्तिकरण (marginalization) मा प्रभाव पार्छ ।

**उदाहरणका लागि:**

- सबै अन्तरलिङ्गी व्यक्तिहरू आफ्नो यौन विशेषताका आधारमा विभेद भोग्दछन् । तर जन्मँदै देखिने अन्तरलिङ्गी विविधताका व्यक्तिहरूको लागि विभेदपूर्ण वातावरण जन्म देखि सुरु हुन्छ भने किशोरावस्थामा देखिने अन्तरलिङ्गी विविधतका व्यक्तिहरूको लागि विभेदपूर्ण वातावरण किशोरावस्था देखि सुरु हुन्छ ।
- पारलैङ्गिक व्यक्तिहरूले लैङ्गिक पहिचानको आधारमा विभेद भोग्दछन् । दलित समुदायका पारलैङ्गिक व्यक्तिहरू त्यसका साथै जातीय विभेद पनि भोग्दछन् ।
- त्याचलैङ्गिक समयौनिक पुरुषहरूले भोग्ने विभेद र पारलैङ्गिक समयौनिक पुरुषहरूले भोग्ने विभेद फरक हुन्छ । दुबैजना समयौनिक (यौन अभिमुखिकरण) भएका कारणले विभेद भोग्दछन् भने दुबैजना पुरुष हुन् र लैङ्गिकताको आधारमा विभेद भोग्दैनन् । त्यसै गरी पारलैङ्गिक पुरुषलाई आफ्नो लैङ्गिक विशेषताको आधारमा विभेद हुन्छ भने त्याचलैङ्गिक पुरुषलाई हुँदैन ।

तसर्थ व्यक्तिको सिमान्तिकरण र विशेषाधिकारको कुरामा उसको यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताले प्रभाव पार्छ नै, तर यसका साथै ती व्यक्तिको अरु पहिचान एवं पृष्ठभूमीको समेत उत्तिकै भूमिका रहन्छ । यसरी विभेद र सिमान्तिकरण एवं विशेषाधिकारको विश्लेषण गर्दा व्यक्तिको विभिन्न पहिचान एवं पृष्ठभूमीलाई समाविष्ट गर्ने विश्लेषणलाई **अन्तरवर्गियता** (अङ्ग्रेजीमा : **Intersectionality**) भनिन्छ ।

## क्वयेर व्यक्ति

सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूलाई **क्वयेर व्यक्ति** (अङ्ग्रेजीमा : **Queer person**) पनि भनिन्छ । अङ्ग्रेजी भाषामा पहिले 'Queer' शब्दलाई सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूलाई अवहेलना गरिने शब्दका रूपमा प्रयोग गरिन्थ्यो ।

बीसौँ शताब्दीको अन्त्यमा ती व्यक्तिहरू आफैले यस शब्दलाई पुनर्दाबि र पुनर्व्याख्या गरि अपनत्व जनाएर यस शब्दलाई लाञ्छना रहित शब्दको रूपमा प्रयोग गर्ने अभियान चलाएका थिए ।[70] फलतः अहिले यस शब्दलाई सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको विद्रोहको रूपमा हेरिन्छ ।

समसामायिक प्रचलनमा यस शब्दलाई 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति'को पर्यायवाची शब्दका रूपमा प्रयोग गरिन्छ ।

'क्वयेर' एउटा विचारधारा पनि हो । विशेष गरि यो शब्द विद्रोहको द्योतकका रूपमा हेरिन्छ किनभने समाजमा जसरी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूलाई लाञ्छित तुल्याउने प्रयासलाई विफल गरि एउटा अपशब्दलाई सम्मानजनक शब्दको रूपमा स्थापित गरियो । यसरी समाजमा व्यापक लैङ्गिकता र यौनिकताको मूल्य मान्यताहरूले नै निश्चित पहिचानका व्यक्तिहरूलाई केन्द्रमा राखि 'अरु' पहिचानका व्यक्तिहरूलाई अन्यकरण र सिमान्तिकरणमा पारेको दृष्टिकोणले गरिने आलोचना, समालोचना र विमर्शमा **क्वयेर सिद्धान्त (Queer Theory)** आधारित छ ।[71] [72] कतिपय विश्वविद्यालयहरूले यही विषयमा **क्वयेर शास्त्र (Queer Studies)** शैक्षिक विधा समेत स्थापना गरेका छन् ।[73]

## एलजिबिटीआइ

कतिपय प्रचलनहरूमा अङ्ग्रेजी संक्षेपिकरण LGBTI को समेत प्रयोग गरेको पाइन्छ । 'LGBTI' भन्नाले समयौनिक महिला (Lesbian), समयौनिक पुरुष (Gay), द्वियौनिक व्यक्ति

[70] QUEERS READ THIS, A leaflet distributed at pride march in NY Published anonymously by Queers, June, 1990
[71] Oxford Reference, https://www.oxfordreference.com/view/10.1093/oi/authority.20110803100358573
[72] Queer Theory: A Rough Introduction, 2020, Illinois Library, University of Illinois
[73] University LGBT/Queer Programs, 2020, List of universities in US & Canada that provides Queer Studies program, http://www.people.ku.edu/~jyounger/lgbtqprogs.html

(Bisexual person), पारलैङ्गिक व्यक्ति (Transgender person) र अन्तरलिङ्गी व्यक्ति (Intersex person) बुझिन्छ ।

यस्तो संक्षेपिकरणको विभिन्न ढङ्गले प्रयोगहरू गरिएको पाइन्छ । जस्तै: - LGB, LGBT, GLBT, LGBTI, LGBTIQ, LGBTIQ+, LGBTIQA, LGBTIQAP, LGBTIQAP+ इत्यादी । यस्ता संक्षेपिकरणहरूले निश्चित पहिचानहरूलाई किटानी गर्दछ । जस्तै LGBTI संक्षेपिकरणले पाँचवटा पहिचान, LGBT संक्षेपिकरणले चारवटा पहिचान, इत्यादी । यस्तो संक्षेपिकरण सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको विविधता समावेशी छैन । यस्ता संक्षेपिकरणको प्रयोगमा कोही समावेश हुने र कोही समावेश नहुने अवस्था रहन्छ । अब, कुनै निश्चित पहिचान नै किटानी गर्नुपर्ने अवस्था वा सन्दर्भमा सोही अनुसारका शब्दहरू मात्र प्रयोग गर्न सकिन्छ, तर 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति' भन्ने शब्दावलीले जसरी व्यापक रूपमा व्याख्या गर्दछ, त्यसरी नै LGB, LGBT, GLBT, LGBTI, LGBTIQ, LGBTIQ+, LGBTIQA, LGBTIQAP, LGBTIQAP+ लगायतका संक्षेपिकरणहरूले समावेश गर्दैन ।

## लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक

नेपालको संविधान २०७२ मा सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूलाई जनाउन "लैङ्गिक तथा यौनिक अल्पसंख्यक" शब्दावलीको प्रयोग गरिएको छ । [74] तर यो शब्दावली 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति' शब्दावली जस्तै स्पष्ट छैन । यो जनसंख्या अल्पसंख्यक होइनन् भन्ने तर्क पनि छ । तसर्थ दीर्घकालीन रूपमा संविधानमा प्रदत्त 'लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक' शब्दावलीलाई 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति' शब्दावलीले प्रतिस्थापन गर्नुपर्छ भन्ने हाम्रो माग रहेको छ ।

---

[74] नेपालको संविधान २०७२, भाग-३ मौलिक हक र कर्तव्य अन्तरगत १८. समानताको हक, ४२. सामाजिक न्यायको हक

# परम्परागत प्रचलनका केही शब्दावलीहरू

**यी शब्दावलीहरूको बारेमा चर्चा गर्नुपर्दा केही तथ्यहरू :-**

- परम्परागत प्रचलनमा रहेका शब्दावलीहरूको अवधारणा, परिभाषा वा बुझाई अस्पष्ट हुन सक्छ ।
- यस्ता कतिपय शब्दहरू अपशब्द वा गालीगलौजका शब्दहरू हुन सक्छन् । यी शब्दहरूको जटिल सामाजिकता छ । जस्तै:- समाजको नजरमा कुनै व्यक्ति उक्त समाजको पुरुष वा महिलाको बुझाई अन्तरगत नदेखेमा वा नलागेमा उनीहरूलाई होच्याउन यी शब्दहरू प्रयोग गर्न सकिन्छ । तर केही व्यक्तिहरू स्वयंले नै यी शब्दहरू दाबी गरेर यी शब्दहरूमै गौरव मान्ने गरेका छन् ।
- यी शब्दावली र यस सँग जोडिएका बुझाई समकालीन अवस्थामा असान्दर्भिक हुन सक्छ ।
- यस्ता शब्दहरूको प्रयोगमा संवेदनशीलता अपनानुपर्छ ।

नेपालमा बसोबास गर्ने विविध जात-जातीय, भाषिक, धार्मिक, लगायतका समुदायहरूको परम्परागत बोलीमा महिला र पुरुष बाहेकका लैङ्गिकता जनाउने केही शब्दावलीहरू प्रचलनमा रहेको पाइन्छ ।

## मैंबाबु

नेवाः समुदायमा 'मैंबाबु' भन्ने शब्द प्रचलनमा रहेको पाइन्छ । नेपालभाषामा 'मैं'को अर्थ 'केटी' र 'बाबु'को अर्थ 'केटा' रहेको र यी दुई शब्दलाई जोडेर महिला पुरुष बाहेकका व्यक्तिहरूलाई 'मैंबाबु' भन्ने गरिएको छ । नेपालभाषाको दोलखा भाषिकामा 'नानिबाबु' पनि भन्ने गरिएको पाइन्छ । यो शब्द अन्तरलिङ्गी बच्चाहरू : जस्तै दुबै यौनाङ्ग भएका बच्चाहरू जन्मँदा प्रयोग

गरेको पाइन्छ। वा कुनै व्यक्तिलाई जन्मँदा एउटा लैङ्गिकतामा हुर्काइएको छ र उसको लैङ्गिक अनुभूती तथा अभिव्यक्ति त्यो भन्दा फरक भएमा (जस्तै: पारलैङ्गिक व्यक्तिहरू) पनि यो शब्द प्रयोग गर्न गरिएको छ । यो परम्परागत प्रचलनको शब्दमा स्पष्टता नभएको कारणले समकालीन अवस्थामा यो शब्द नरुचाइन सक्छ । अन्तरलिङ्गी व्यक्तिहरूको पनि लैङ्गिक पहिचान पुरुष, महिला वा गैर-द्वयसांखिक हुन सक्छ र पारलैङ्गिक महिलाहरूले महिला तथा पारलैङ्गिक पुरुषहरूले पुरुष भनि पहिचान गर्छन् । तर कतिपय पुराना पुस्ताका नेवाः समुदायका व्यक्तिहरूले आफूलाई 'मैंबाबु' भनेर चिनाउने गरेको पनि पाइन्छ।[75]

नेपालभाषामा पनि समकालीन आवश्यकता अनुसार यौभिकयौता सम्बन्धी विभिन्न शब्दहरू विकास भएका छन्। हेर्नुहोस् : नेपाल संवत् ११४१/०१/१७ मा प्रकाशित 'यचा क्वसाः, जाः म्हसिका व यचिं तजिसु सम्बन्धि नेपालभासय् आधारभूत खँग्वःत' (आइएसबिएन : 978-9937-0-8031-6)

## मौगिया

केही प्रकाशनहरूमा 'मौगिया' शब्द मधेस तिर तेस्रोलिङ्गी व्यक्तिहरूलाई जनाउन प्रयोग गरिन्छ भनि उल्लेख गरिएको छ ।[76] मैथिली भाषी समुदायमा यो शब्दको प्रयोग गरिएको पाइन्छ। ठाउँ अनुसार 'मौहियाह', 'मौगियाही' वा 'मौगी' भन्ने पनि प्रयोग गरिन्छ। केही मैथिली भाषीहरूसँग बुझ्दा यो शब्द कुनै पुरुषले सामाजिक मान्यता अनुसार पुरुष जस्तो व्यवहार नगरेमा उसलाई अवहेलित तुल्याउनका लागि यो शब्दको प्रयोग गरिन्छ भन्ने बुझ्नमा आएको छ ।[77] मधेसमा कार्यरत एक तेस्रोलिङ्गी अधिकारकर्मीसँग कुराकानी गर्दा उनका अनुसार कतिपय व्यक्तिहरू जो जन्मँदा पुरुष भनेर हुर्काइएका थिए र आफ्नो लैङ्गिकता महिला रहेको अनुभूती गर्छन्, ती व्यक्तिहरूले आफूलाई चिनाउन यी शब्दहरूलाई सामान्य रूपमा प्रयोग गरेको पनि बुझ्न आएको छ।[78]

[75] यचा क्वसाः, जाः म्हसिका व यचिं तजिसु सम्बन्धि नेपालभासय् आधारभूत खँग्वःत, नेसं ११४१, रुक्शना कपाली
[76] नील हिरा समाज, समलिङ्गी / तेश्रो लिङ्गी बारे बारम्बार सोधिने प्रश्नहरू, विसं २०६७, पृष्ठ संख्या ३
[77] कल्पना झा, पल्लवी पायल (व्यक्तिगत पत्राचार मार्फत् प्राप्त सूचना)
[78] तेस्रोलिङ्गी अधिकारकर्मी नग्मा खान, सर्लाही (व्यक्तिगत पत्राचार मार्फत् प्राप्त सूचना)

## खोजिन्

मैथिली र भोजपुरी भाषामा तेस्रोलिङ्गी व्यक्तिहरूलाई जनाउन 'खोजिन्' भन्ने शब्द पनि प्रयोग हुन्छ ।[77] मधेसमा कार्यरत एक तेस्रोलिङ्गी अधिकारकर्मीले भने स्पष्ट यौनाङ्ग नभएका वा दुबै यौनाङ्ग भएका बच्चाहरू जन्मँदा 'खोजिन्' भन्ने गरेको बताएका छन् ।[78]

## ཕོ་ལོག་མོ་ལོག 'प्होे-लो मो-लो'

कतिपय प्रकाशनहरूमा हिमाली भेगमा 'फुलुमुलु' भन्ने शब्द प्रयोगमा रहेको भनि उल्लेख छ ।[76] हिमाली भेग पनि आफैमा विविध छ र त्यहाँ विभिन्न भाषाहरू प्रचलनमा छन् । 'फुलुमुलु' भन्ने शब्द कुन स्थान वा समुदायमा प्रचलित रहेको भनि उल्लेख छैन । माथिल्लो मुस्ताङमा बोलिने ल्होवा भाषाको एक शब्दकोषमा 'फोलोक मोलोक' र त्यसको अर्थ 'तेस्रोलिङ्गी' भनि उल्लेख छ ।[79] तिब्बती भाषाका जानकारहरूसँग बुझ्दा तिब्बती भाषामा 'ཕོ་ལོག་མོ་ལོག' भन्ने शब्दावली प्रचलनमा रहेको बुझिएको छ । यसलाई लिप्यातरण गर्दा 'फो लोग मो लोग' हुन्छ भने यसको उच्चरण 'प्हो-लो मो-लो' भनि गरिन्छ ।[80] यसको शाब्दिक अर्थ बुझ्दा 'प्हो'को अर्थ पुरुषत्व (masculine) र 'मो'को अर्थ नारीत्व (feminine) हुन्छ भने 'लो'को अर्थ 'विपरीत वा फर्कनु' हो । त्यसैले 'प्हो-लो मो-लो'को अर्थ महिला पुरुष तर्फ जाने आउने अथवा तरल / परिवर्तनशील लैङ्गिक प्रवृत्तिलाई जनाउन प्रयोग गरिन्छ । यो शब्दावली डोल्पो भाषामा पनि प्रयोग गरेको पाइन्छ ।[81]

## मेटी

नेपालका कतिपय पहाडी समुदायहरूमा 'मेटी' भन्ने शब्द प्रचलनमा रहेको पाइन्छ ।[76] दार्जिलिङमा नारीत्व स्वभाव भएका पुरुषहरूलाई 'मेट्टा' भन्ने गरिन्थ्यो भने नेपालमा यो शब्द आयात हुँदा 'मेटी' शब्दको रूपमा प्रचलनमा आएको हो ।[82] [83] नेपालमा मेटीहरूले एक-

79 ल्होवा-नेपाली-अङ्ग्रेजी शब्दकोष, सन् २०१६, SIL International
80 Aksharamukha : Script Converter
81 टासि टेवा डोल्पो (व्यक्तिगत पत्राचार मार्फत् प्राप्त सूचना)
82 पिङ्की गुरुङ, सन् २०२१/०१/०४, LGBTIQ Rights in Nepal विषयक Rotaract Club of Pashupati Nepal Law Campus | Public Group ले आयोजना गरेको संवाद

आपसमा बोल्दा मेटी भाषाको प्रयोग गर्छन् । यो नेपाली भाषामा आधारित एउटा गोप्य संवाद शैली हो ।[84]

**خواجہ سرا ख्वाजा सिरा**

मुश्लिम समुदायहरूमा 'ख्वाजा सिरा' भन्ने शब्दावली प्रचलनमा छ ।[78 16]

**हिज्रा**

भारतीय उपमहाद्वीपमा महिला र पुरुष भन्दा फरक एउटा लैङ्गिकताका रूपमा हिजडा, हिज्रा वा हिजरा भन्ने सामाजिक समुदाय रहेको छ । भारतीय उपमहाद्वीपमा हिजडा समुदायको उल्लेखनीय इतिहास रहेको पाइन्छ । हिजडा समुदायको बारेमा कामसुत्र जस्ता ग्रन्थमा समेत उल्लेख भएको छ भने हिजडा समुदायको इतिहास मुगल साम्राज्यको समयसँग जोडिएको देखिन्छ । त्यसै गरि नर वा नारीको बन्धन भन्दा माथि उठेको र तसर्थ हिजडा समुदायका व्यक्तिहरू अलौकिक भन्ने धार्मिक आस्था समेत रहेको पाइन्छ । हिजडा समुदायका व्यक्तिहरू सुखद अवसरहरूमा नाचगान गरि आशिर्वाद दिने पनि चलन रहेको पाइन्छ । हिजडा समुदायमा गुरु-चेला प्रथा रहेको पाइन्छ । एउटा घरानाको मूलीका रूपमा एकजना गुरु हुन्छ । उक्त गुरु अन्तर्गत अरु चेलाहरू हुन्छन् । गुरुले घरानाका सबै नियम अनुशासनको निर्धारण गर्ने र पालना गर्ने गराउने कार्य गर्छन् ।[85]

इतिहासको कुनै कालखण्डमा सामाजिक स्वीकार्यता र मान्यता रहेका लैङ्गिकता (जसलाई समसामायिक भाषामा त्याचलैङ्गिक व्यक्तिहरू भन्न सकिन्छ) बाहेक अरु विविध लैङ्गिकताका व्यक्तिहरू मूलधारको समाजमा विभेद, लाञ्छना र तिरस्कार भोग्नुपर्ने हुनाले आफूहरू छुट्टै स्थानमा छुट्टै बसेर जीवन निर्वाह गर्नुपर्ने बाध्यता हुन सक्थ्यो । त्यसरी छुट्टै बसोबास गरिसकेपछि मूलधारको समाजबाट अलगिँदै जाने र आफ्नै छुट्टै परम्परा र चलन समेत

---

[83] Transnational resources and LGBTI+ activism in Nepal, PhD Thesis, Kumud Rana, page 119 to 125
[84] लैङ्गिकता र यौनिकता सम्बन्धी त्रैभासिक शब्द संग्रह, नेसं ११३९, रुक्शना कपाली, पृष्ठ ७
[85] Neither Man nor Woman: The Hijras of India by Serena Nanda, Wadsworth Publishing Company, Second Edition 1999 : Vol. A-1

विकास हुँदै गएको पनि पाइन्छ । भारतीय उपमाहाद्वीप अन्तरगत भारत, पाकिस्तान र बङ्लादेशमा हिजडा समुदायको व्यापक बसोबास छ । त्यसैले सबै हिजडा समुदायहरूमा एउटै संस्कार नहुन सक्छ । ती समुदायहरूले कुन देवतालाई मान्ने, उनीहरूको समाज वा घरानामा कोही भित्रँदा कस्तो रीतिरिवाज हुने, उनीहरूको समाजमा कसैको मृत्यु हुँदा मृत्यु संस्कार कसरी गर्ने लगायतका संस्कारहरू पनि आ-आफ्नै हुने गर्दछ । उनीहरूले विशिष्ट प्रवृत्तिको ताली बजाउने गर्दछन् र तालीको माध्यमबाट खुशी, रीस प्रकट गर्ने, आफू सुरक्षित रहेको संकेत दिने लगायतका भावनाहरू अनुप्रदान गर्ने गर्छन् । कतिपय हिजडा समुदायहरूमा आफ्नो छुट्टै प्रकारको भाषा समेत बोल्ने गरिन्छ, उदाहरणको लागि हिज्रा फारसी भाषा, गुप्ती भाषा, इत्यादी । [86] [87] [88]

नेपालमा कतिपय प्रकाशनहरूमा नेपालमा पनि हिजडा समुदायको उपस्थिति वा आफूलाई हिजडा भनेर पहिचान गर्ने व्यक्तिहरू छन् भन्ने उल्लेख गरिएको छ । केही उपाख्यानात्मक प्रमाण (Anecdotal evidence) का अनुसार नेपालको मधेस क्षेत्रमा हिजडा समुदायहरू रहेको र नाचगान गरि पैसा कमाउन सक्ने समयको बेला भारत-नेपाल वारपार गरि आयाअर्जन गर्ने गरेको भन्ने थाहा भएको हो ।[89] तर नेपालमा हिजडा समुदायहरू बारेमा तथ्यपरक ढङ्गले खोज अनुसन्धान भएको छैन, र आफूलाई हिजडा भनि पहिचान गर्ने कुनै पनि समूह अगाडी आएको देखिँदैन ।

**सावधान:** नेपालमा यो शब्दावली अपशब्द, गालीगलौज र अवहेलना गर्ने ढङ्गले प्रयोग गरेको पाइन्छ । 'हिजडा' शब्दको उत्पत्ति अपमानजनक नभएतापनि र भारतीय उपमहाद्वीपमा सम्मानजनक ढङ्गले प्रयोग गरेतापनि नेपालको सन्दर्भमा सोही कुरा लागु नहुन सक्छ । नेपालमा यो शब्दलाई मौखिक हिंसाका रूपमा प्रयोग गर्ने गरिन्छ ।
यस शब्द प्रयोगमा संवेदनशीलता अपनाउनुपर्छ । धेरैजनाको लागि यो शब्द उनीहरूको जीवनकालमा आफू प्रति हुने हिंसासँग सम्बन्धित रहेकाले यस्तो शब्दको असंवेदनशील प्रयोगले ती व्यक्तिहरूलाई थप हिंसित तुल्याउन सक्छ ।

---

[86] Zehra Rehman, Quartz India, 2016, The secret language of South Asia’s transgender community
[87] Tushant Mittal, The Secret Language of the Hijras
[88] International Journal of Humanities and Social Science, Queer but Language: A Sociolinguistic Study of Farsi, Vol. 1 No. 10, August 2011
[89] मनिषा ढकाल, नील हिरा समाजका कार्यकारी निर्देशक (व्यक्तिगत पत्राचार मार्फत् प्राप्त सूचना)

## विविध

केही प्रकाशनहरूमा तेस्रोलिङ्गी व्यक्तिहरूलाई बुझाउन 'सिङ्गारु', 'मारुनी', 'नटुवा' जस्ता शब्दहरू पनि प्रचलनमा रहेको उल्लेख गरिएको छ ।[76 90] नेपाली वृहत् शब्दकोषमा पनि 'सिँगारु' शब्द उल्लेख छ, तर शब्दकोषमा अपमानजनक एवं असंवेदनशील भाषा प्रयोग गरेर अर्थ उल्लेख गरिएको छ ।[91] तर यी शब्दावलीहरू नेपालका विभिन्न संस्कृतिहरूमा पुरुषले महिलाको भेष लगाएर नाच्ने नृत्य वा संस्कृति जनाउन प्रयोग गरिने हो । अब यसै आधारमा ती समुदायहरूले तेस्रोलिङ्गी व्यक्तिहरूलाई पनि त्यही शब्दहरू प्रयोग गर्ने गरेको छ वा छैन भन्ने बारे तथ्यपरक जानकारी छैन । सन् २०१४ को एउटा सर्वेक्षणमा कोथी, धुरानी, नचनैब, किन्नर जस्ता शब्दहरू समेत पनि प्रयोगमा रहेको देखाउँछ ।[92] तर यी शब्दावलीहरू बारे कुनै विस्तृत अध्ययन वा थप जानकारी छैन ।

[90] Transnational resources and LGBTI+ activism in Nepal, PhD Thesis, Kumud Rana, page 126 to 127
[91] नेपाली वृहत् शब्दकोष अनलाइन एप, विसं २०७६
[92] Williams Institute, Surveying Nepal's Sexual and Gender Minorities, October 2014

# विविध शब्दहरू

## तेस्रोलिङ्गी

तेस्रोलिङ्गी भनि पहिचान गर्ने व्यक्तिहरूले आफूलाई महिला वा पुरुष भन्दा फरक वा भिन्न भनि व्याख्या गर्ने गरेका छन् ।[76] 'तेस्रोलिङ्गी' भन्ने शब्द नेपालमा सन् २००७ सुनिलबाबु पन्त विरुद्ध नेपाल सरकारको फैसला पछि प्रयोगमा आएको देखिन्छ ।

**अपनत्व:** तेस्रोलिङ्गी भनि पहिचान गर्ने व्यक्तिहरू आफूमा महिला पुरुष भन्दा फरक लैङ्गिक गुण भएको कारणले आफू महिला वा पुरुष भनि पहिचान नगर्ने र तेस्रोलिङ्गी पहिचान दाबी गर्छन् ।

**अवस्था:** यो शब्द समसामायिक अवस्थामा धेरैले रुचाउँदैनन् र यसको प्रयोग क्रमशः घट्दै गएको छ ।

**आलोचना:** तेस्रोलिङ्गी शब्द आफैमा विभेदकारी रहेको आलोचना भएको पाइन्छ । कोही पनि पहिलोलिङ्गी र दोस्रोलिङ्गी नरहेको वा कोही पनि पहिलोलिङ्गी र दोस्रोलिङ्गी हुँदैन भने तेस्रोलिङ्गी पनि एउटा श्रेणीगत वा तहगत रूपमा बुझाउन खोजिएको भनि आलोचना भएको पाइन्छ । महिला आन्दोलनमा महिला हुनुलाई दोस्रो दर्जाको लैङ्गिकता वा दोस्रोलिङ्गीका रूपमा हेरिने दृष्टिकोणलाई विरोध गरिन्छ, तर समाजले महिला पुरुष भनि नदेख्दैमा कुनै पनि व्यक्तिलाई तेस्रोलिङ्गी उपमा दिनु उचित नरहेको भन्ने आलोचना रहेको छ । समाजको मूल्यमान्यता अनुसार कसैलाई पुरुष वा महिला दुबै होइन भन्ने लाग्दैमा उसको स्वःअनुभूतीको लैङ्गिक पहिचान त्यस्तै नहुन सक्छ । उसले आफूलाई पुरुष वा महिला भनि पहिचान गरेतापनि उसलाई त्यस भन्दा फरक लैङ्गिकतामा हुर्काइएकै कारण उसलाई 'तेस्रोलिङ्गी'को उपमा पनि दिने गरिन्छ, जुन उसको मानव अधिकारको उल्लंघन हो ।

**सावधानी:** यस शब्द प्रयोगमा संवेदनशीलता अपनाउनुपर्छ । अघि 'लैङ्गिक पहिचान' अध्यायमा उल्लेख गरिएको स्मरण गराउँदै : लैङ्गिक पहिचान प्रत्येक व्यक्तिको आत्मनिर्णयको अधिकार हो । यदि कुनै व्यक्तिले आफूलाई 'तेस्रोलिङ्गी' भनेरै चिनाउँछ भने ती व्यक्तिलाई सोही भनि सम्बोधन गर्नु उचित रहन्छ । तर कसैले आफूलाई 'तेस्रोलिङ्गी' भनि नचिनाउँदा नचिनाउँदै अनिच्छापूर्ण रूपमा यो शब्द लाद्नु भनेको लैङ्गिक दुस्बोधनजन्य हिंसा हो ।

**भ्रम तथा मिथ्या विचारहरू:**

'तेस्रोलिङ्गी' शब्द सम्बन्धिका केही गलत बुझाई वा भ्रमहरू चिर्नु पर्दा देहाय बमोजिमका छन्:-

१) तेस्रोलिङ्गी भनेको ट्रान्सजेण्डर होइन । तेस्रोलिङ्गी व्यक्तिहरू आफूलाई महिला र पुरुष भन्दा छुट्टै लैङ्गिकताका रूपमा व्याख्या गर्छन् । पारलैङ्गिक (ट्रान्सजेण्डर) महिलाहरू 'महिला' र पारलैङ्गिक (ट्रान्सजेण्डर) पुरुषहरू 'पुरुष' भनी नै पहिचान गर्छन् । यी दुई शब्दहरूको अर्थ तात्विक रूपमा फरक छ ।

२) तेस्रोलिङ्गी भन्नाले 'LGBTI' होइन । केही व्यक्तिहरूले महिला र पुरुष बाहेक तेस्रो लिङ्गी हुन्छ, र तेस्रो लिङ्गी भन्नाले पाँच थरीका व्यक्तिहरू क्रमशः LGBTI हुन् भन्ने भ्रमात्मक र गलत धारणा समेत रहन गएको पाएका छौँ । हामीले यो पुस्तकमा अघिका अध्यायहरू पढ्दा LGBTI भन्नाले के हो र यौभिकयौता तीन फरक-फरक कुराहरू हुन् भन्ने बुझिसक्यौँ । प्रत्येक शब्दावलीको छुट्टै अर्थ छ । यसमा अन्योलता गर्नुहुँदैन ।

३) अन्तरलिङ्गी व्यक्तिहरू तेस्रोलिङ्गी होइनन् । अन्तरलिङ्गी एउटा यौन विशेषता हो, तेस्रोलिङ्गी एउटा लैङ्गिक पहिचान हो । खासमा 'तेस्रोलिङ्गी' शब्द लैङ्गिक पहिचान भएकाले 'लिङ्गी' नभएर 'लैङ्गिक' हुनपर्ने हो । तर प्रचलनमा भने 'तेस्रोलिङ्गी' भनेर ल्याइएको छ । अन्तरलिङ्गी यौन विशेषताका व्यक्तिहरूको लैङ्गिक पहिचान पुरुष वा महिला समेत हुन सक्छ ।

आम सञ्चारमाध्यमहरूले सतही ढङ्गले बुझिदिने, अतिसरलीकरण गरेर लेखिदिने, जनचेतनामा भन्दा पनि आफ्नो लेख वा सामाग्रीमा बढी भन्दा बढी भ्यू आओस् भन्ने दृष्टिकोणले हेरिदिने लगायतका कारणहरूले यस विषय सम्बन्धी मिथ्या विचार र भ्रमहरू बढाएको छ । यति मात्र नभएर तेस्रोलिङ्गी भनि पहिचान नगर्ने व्यक्तिहरूलाई समेत अनिच्छापूर्ण र जबरजस्ती ढङ्गमा सञ्चार माध्यमहरूको आफूखुशी 'तेस्रोलिङ्गी' भनेरै सम्बोधन गर्ने जिद्दी ढीपि ज्वलन्त रहेको कारणले यस्ता धेरै नै मिथ्याविचारहरू फैलिन पुगेको छ । नेपालमा चर्चित र विश्वसनीय मानिने सञ्चार माध्यमहरूले तेस्रोलिङ्गी भनि पहिचान नगर्ने व्यक्तिलाई अनिच्छापूर्ण 'तेस्रोलिङ्गी' भनि सम्बोधन र उल्लेख गरि समाचार सम्प्रेषण गरिदिएको घटनाहरू भेटाउन सकिन्छ । यस्तो अनैतिक अभ्यासहरूले निज व्यक्तिहरूको जीवनमा मात्र नभएर, पारलैङ्गिक व्यक्तिहरूको अधिकारका निम्ति हुँदै आएको कानुनी वकालत तथा पैरवी एवं जनमानसले पारलैङ्गिक व्यक्तिहरू बारे राख्ने बुझाईमा समेत प्रतिकूल असर पुऱ्याएको छ । BBC World मा A lesbian couple attacked in London भन्ने समाचार नेपाली सञ्चार माध्यमहरूले 'तेस्रोलिङ्गी जोडीलाई लण्डनमा आक्रमण' भनि छापिएको पाइन्छ, जबकि 'Lesbian'को अर्थ 'समयौनिक महिला' हो वा महिला-महिला जोडी भएको कारण 'समलैङ्गिक जोडी' पनि भन्न सकिन्थ्यो । तर यसरी तात्विक अर्थ नै फरक भएको 'तेस्रोलिङ्गी' शब्दको प्रयोग गरियो । अर्थ नै नबुझी असंवेदनशील ढङ्गले 'तेस्रोलिङ्गी' शब्दको प्रयोग हुनु पनि सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको लागि एउटा ठूलो समस्याका रूपमा खडा भएको छ । तेस्रोलिङ्गी शब्दले केवल तेस्रोलिङ्गी व्यक्तिहरूलाई जनाउँछ । यो अरु पहिचानहरूलाई समेत जनाउन मिल्ने छाता शब्द होइन ।

## समलिङ्गी

**उत्पत्ति:** 'समलिङ्गी' भन्ने शब्द पनि नेपालमा सन् २००७ सुनिलबाबु पन्त विरुद्ध नेपाल सरकारको फैसला पछि प्रयोगमा आएको देखिन्छ । यसको प्रारम्भिक कालीन प्रयोगमा 'समयौनिक व्यक्ति'हरूलाई जनाउन र 'समलैङ्गिक' अर्थ जनाउनका निम्ति प्रयोग हुन्थ्यो ।[76]

**तेस्रोलिङ्गीको पर्यायवाची:** सञ्चारमाध्यमहरूले 'समलिङ्गी तेस्रोलिङ्गी' भनेर दुबै शब्दहरूलाई सँगै प्रयोग गर्ने प्रचलन बढ्दा समलिङ्गी तेस्रोलिङ्गी दुई शब्दहरू एउटै अर्थमा पनि प्रयोग गर्ने गरिएको पाइन्छ । कतिपय प्रयोजनमा 'तेस्रोलिङ्गी'को पर्यायवाची शब्दका रूपमा 'समलिङ्गी' शब्दको प्रयोग गरेको पाइन्छ ।

**समयौनिक व्यक्ति (Gay/Lesbian):** समयौनिक व्यक्तिहरूलाई 'समलिङ्गी' भन्नु उचित होइन । समयौनिक हुनु एउटा 'यौनिकता' हो 'लिङ्ग' होइन । समयौनिक व्यक्तिहरूलाई 'समलिङ्गी' भन्दा लिङ्ग र यौनिकता बिच अन्योलता सृजना हुन्छ ।

**समलैङ्गिक:** 'समलैङ्गिक' शब्दको शाब्दिक अर्थ 'उस्तै लैङ्गिकता' (Same gender) भन्ने बुझिन्छ । 'समलिङ्गी' शब्दको प्रयोग हुन थालेको प्रारम्भिक कालमा यही अर्थको रूपमा प्रयोग गर्न सुरु भएको हो । तर 'लिङ्गी' भन्दा यौनाङ्गमा केन्द्रित हुन पुग्छ । जस्तै: समलिङ्गी सम्बन्ध भन्दा शिश्न-शिश्न (Penis-Penis) र योनी-योनी (Vagina-Vagina)को सम्बन्ध भन्ने बुझिन्छ । पुरातन प्रचलनमा सेक्स र जेण्डर नछुटिने वा अस्पष्ट ढङ्गले 'लिङ्ग' शब्दको प्रयोग गरिने भएकाले पनि 'समलिङ्गी' शब्द विकास भएको हो । यद्यपि हाल जेण्डरलाई 'लैङ्गिकता' भनेर बुझिन्छ र सेक्स-जेण्डर बिच शाब्दिक अन्योलता छैन । 'लैङ्गिक' भन्नाले 'लैङ्गिकता' - महिला, पुरुष, गैर-द्वयसांखिक हुनुमा आधारित छ । 'समलैङ्गिक सम्बन्ध' भन्नाले महिला-महिला, पुरुष-पुरुष र गैर-द्वयसांखिक व्यक्ति - गैर-द्वयसांखिक व्यक्ति बिचको सम्बन्ध भनि बुझिन्छ । यो शब्द पारलैङ्गिक व्यक्ति र अन्तरलिङ्गी व्यक्तिहरूको लागि पनि समावेशी छ ।

***